विलासी भौमासुरले ती राजकन्याहरूलाई बन्दी बनाएको थियो अर्थात् अनधिकारी कामी व्यक्तिले मन्त्रहरूको अनर्थ गरेको थियो। कामा व्यक्ति आफ्नो विलासी मनको पुष्टिका निमित्त मन्त्रको विकृत अर्थ लाउँछ। यस्ता मानिसले मन्त्रको दुरुपयोग गर्छ।

विलासी भन्दछ 'भगवान्‌ले गीतामा मोज गर भनेको छ। त्यसकारण हामी मोज किन नगरौं ?' यस्ता मानिसले 'सिद्धिर्भवति कर्मण' को श्लोकलाई ठीक अर्थ नलाएर अर्कै अर्थ लगाउँछन्। यस श्लोकको सही अर्थ हो कर्महरूबाट सिद्धि पाइन्छ, तर विलासीहरूले अर्कै अर्थ लगाउँछन्। वास्तवमा यस श्लोकले अनासक्तिको उपदेश दिन्छ।

'सर्वस्य चाहम्' को केही मानिसहरूले के अर्थ लाउँछन् भने सबैमा चियाको रूप छु। चिया पाइयो भने स्मृति अन्यथा विस्मृति। गीताका श्लोकहरूको यस्तो विकृत अर्थ लाउने पनि छन्।

वेदको तात्पर्य भोगमा होइन, त्यागमा हो। वेदलाई भोग होइन त्याग मात्र इष्ट छ। वेदहरूको तात्पर्य भोगपरक होइन, निवृत्तिपरक हो। प्रवृत्तिहरूलाई एकैपटक सदाका निमित्त छोड्न त सकिन्न तर जे पनि गर, धर्मको मर्यादामा रहेर गर। धर्मको मर्यादामा रही अर्थोपार्जन र कामोपभोग गर।

वेदहरूको भनाइ छ भोगहरूलाई बिस्तारै-बिस्तारै कम गर्दै लैजाऊ, संयमलाई बढ़ाउँदै लैजाऊ।

वेदहरूले प्रवृत्ति र निवृत्ति दुवैको चर्चा गरेको छ तर त्यसको निर्देश निवृत्ति हो।

भोगोपभोगको बानी जीवको अनेक जन्महरूका संस्कारका कारणले हो। यस्तो संस्कार हत्तपत्त छुट्दैन। यसैले वेदहरूले विस्तार-विस्तार निवृत्ति बढ़ाएर लानू भनेर आदेश दिएका छन्। वेदमा सुरापानको पनि चर्चा छ तर यसको अर्थ यो होइन वेदले सुरापानको आदेश दिन्छन्। मानिसै हो जो मनगढ़न्त अर्थ लगाउँछ।

गीतामा प्रधानत: अनासक्तिकै उपदेश छ र पनि मानिस आफ्नो-आफ्नो अर्थ लगाउँछन्। कसैले गीतालाई कर्मप्रधान भनेका छन्। कोही भक्ति-प्रधान भन्छन्, कोही ज्ञान-प्रधान। त्यसो तर गीतामा तीनैको प्राधान्यता छ।

शङ्कराचार्यले भनेका छन् चित्तशुद्धिका निमित्त कर्म आवश्यक छ। चित्तको एकाग्रताका निमित्त उपासना आवश्यक छ। भक्तिपूर्वक कर्मबाट चित्त एकाग्र हुनेछ। भक्ति, उपासनाले मनलाई एकाग्र पार्छ। ईश्वरमा मन एकाग्र भएपछि ज्ञान अवश्य पाइन्छ। ज्ञानले परमात्माको अनुभव गराउँछ।

गीतामा कर्म, भक्ति र ज्ञान तीनैको समन्वय छ।

गीताका प्रथम ६ अध्यायमा कर्मयोगको, सातौंदेखि बाह्रौं अध्यायसम्म भक्तियोगको तथा तेह्रौंदेखि अठ्ठाह्र अध्यायसम्म ज्ञानयोगको वर्णन छ।

भक्ति, कर्म र वैराग्यमध्येबाट कुन प्रधान हो, कुन गौण हो ? सबै प्रधान छन्। जीवनमा तीनौटैको समान आवश्यकता छ। गीता केवल कर्मपरक होइनन्।

विलासीले वेद र गीता सबैबाट विलासी कर्मपरक अर्थ निकाल्ने छ।

भगवान्को विवाहको वर्णनपछि भगवान्को आसक्ति पनि बताइएको छ।

स्नेह सबैसँग गर तर कुनैमा पनि आसक्त नहोऊ, वासनाको अधीन नबन।

एकपटक ग्रीष्मऋतुमा रुक्मिणी श्रीकृष्णको सेवा गरिरहेकी थिइन्। उनी विचार गरिरहेकी थिइन् उनी सबभन्दा राम्री छन् त्यसकारण कृष्ण उनैमा आसक्त हुनुहुन्छ, उनकै अधीन हुनुहुन्छ, सेवाका समय मन सेव्य ( श्रीकृष्ण )-मा लागिरहनुपर्छ। रुक्मिणीले सेवा कृष्णकै गरिरहेकी थिइन् तर उनको मन आफ्नो सौन्दर्यका विचारमा घुमिरहेको थियो, आफ्नो सौन्दर्यका निमित्त उनको मनमा अभिमान आयो त्यसकारण सेवामा हानि हुन गयो।

भगवान्ले थाहा पाइहाल्नुभयो—रुक्मिणीलाई उनको मनमा आफ्नो सौन्दर्य र शृङ्गारका निमित्त आसक्ति र अभिमान छ। उहाँले उनको अभिमानलाई नष्ट गर्न खोज्नुभयो। उहाँले रुक्मिणीलाई भन्नुभयो, 'देवी ! तिमीजस्ती सौन्दर्यवतीको योग्य प्रशंसा र कदर कुनै सम्राटले मात्र गर्न सक्छ, मजस्तो गोपालले सक्दैन। कुनै साधु-सन्तले मेरा विषयमा तिमीलाई छक्याइदिएछ। तिमी राजकन्या हौ, म गोपाल, तिमी गोरी छौ, म श्याम। हाम्रो जोड़ी मिलेन। राजाहरूलाई छोड़ेर मसङ्ग किन विवाह गरेकी ? म तिमीलाई कुनचाहिँ सुख दिउँला ? म निरपेक्ष र उदासी छु। मलाई नारीहरूको सौन्दर्य या सुवर्णको द्वारिकापुरीसङ्ग कुनै सम्बन्ध छैन। सम्राट्सङ्ग विवाह गरेर सुख प्राप्त गर।'

रुक्मिणी भगवान्का यी वचन सुनेर आत्तिइन्। 'मलाई त्याग नगर, मेरा नाथ।' उनलाई मूर्च्छा आयो। श्रीकृष्णले उनलाई पलङ्गमा सुताएर भन्नुभयो, 'देवी ! म ठट्टा गरिरहेको थिएँ। तिमी मलाई प्राणभन्दा पनि प्यारी छौ।'

रुक्मिणीले थाहा पाइहालिन् 'उनको अभिमानलाई नष्ट गर्नका निमित्त मात्र प्रभुले ती सबै कुरा भन्नुभएको थियो। मैले मानेकी थिएँ उहाँ ममा आसक्त हुनु होला तर उदासीन हुनुहुन्छ। भगवान्, यो साँच्चै हो, हाम्रो जोड़ी मिलेको छैन। कहाँ हजूर, कहाँ म ? ज्ञानीजन यहाँको भजन गर्छन्, मूर्ख मेरो। ज्ञानीजन यहाँलाई खोज्छन्, मूर्ख मलाई।'

मेरा स्वामी, आजदेखि म घरमा महारानी होइन दासी भएर बस्ने छु। तपाईंको बड़ो कृपा भयो जो मलाई तपाईंले आफ्नी दासी बनाइदिनुभएको छ। संसारका जीव कालका अधीन छन् उनका साथ किन विवाह गर्ने ? मैले यहाँको चरणको सेवा गर्ने अवसर पाएकीले आफूलाई धन्य संझेकी छु। मैले लौकिक र भौतिक इच्छाले विवाह गरेकी होइन। आजदेखि म यहाँकी महारानी होइन, दासी हुँ।

रुक्मिणीमा नम्रता आयो। जब उनी मानिनी थिइन् तब भगवान्ले भन्नुभएको थियो—'म तिम्रो योग्य छैन। अब अभिमान निर्मूल भयो तब रुक्मिणी भगवानसँग भन्न लागिन्, म तपाईंयोग्य छैन। म रानी होइन दासी हुँ। जब उनी नम्र भइन् त प्रभु उनको सम्मान गर्न थाल्नुभयो।'

जीव जब हरेक प्रकारबाट नम्र भएर भगवान्को शरणमा जान्छ तब भगवान् उसलाई आदरसाथ अपनाउनुहुन्छ।

यस अध्यायको भाव दिव्य छ। स्त्री होइन, स्त्रीको आसक्ति बाधक छ। पतिपत्नीलाई एकसाथ बसेर परस्पर प्रेम गर्नुपर्छ तर आसक्त हुनु हुन्न। शुद्ध प्रेममा विकारवासनाको अभाव हुन्छ। सेवा गर्दाखेरि आँखा र मनलाई सेव्यमा मात्र लगाइराख। जसले आत्माका सिवाय अरू कुनै वस्तुमा आनन्द खोज्दछ त्यो सुखी हुन सक्दैन।

भगवान्ले जुन अनासक्तिको गीतामा उपदेश दिएको छ, त्यसलाई उहाँले आफ्नो जीवनमा पूर्णतः चरितार्थ गर्नुभएको छ। श्रीकृष्ण भोगी भए तापनि त्यागी हुनुहुन्छ। अनासक्तिपूर्वक गरिएको उपभोग बाधक हुँदैन। भगवान्लाई कसैमा पनि आसक्ति छैन। जब उहाँका सोह्र हजार एक सय आठ रानीहरू थिए र सुवर्णद्वारिका पनि थियो, त्यसवेला उहाँको जो मनस्थिति थियो त्यही मनस्थिति द्वारिका नष्ट भएपछि पनि बनिरह्यो। त्यसवेलामा पनि उहाँ उद्धवसँग भन्नुहुन्थ्यो, 'उद्धव ! यो जगत् असत्य छ। सत्य केवल ब्रह्म मात्र हो।' यही अनासक्ति योग हो।

केवल कृष्ण मात्रै सत्य हुनुहुन्छ।

राजा परीक्षित्ले उषा र अनिरुद्धको विवाहको कुरा सुन्ने इच्छा प्रकट गर्नुभयो।

शुकदेवजी वर्णन गर्न थाल्नुभयो—

'महान् शिवभक्त राजा बाणासुरकी उषा नाउँ गरेकी एक सुन्दरी कन्या थिइन्। उषालाई स्वप्नमा अनिरुद्धको दर्शन भयो र उनले स्वप्नमै विवाह पनि गरिन्। जब उनी बिउँझिन् तब नाथलाई बोलाउन थालिन्। उनकी सखी चित्रलेखाले सबै कुरा थाहा पाएर भनिन्—'सखी ! तिमी चिन्ता नगर। म त्यस पुरुषलाई कहींबाट पनि लिएर आउनेछु।' चित्रलेखाले कैयौं पुरुषहरूको चित्र बनाएर उषालाई देखाइन् तर उनको प्रेमीजस्तो चित्र निक्लिएन। जब चित्रलेखाले अनिरुद्धको चित्र बनाइन् तब उषाले लाज मानिन्। चित्रलेखाले थाहा पाइन् अनिरुद्ध आफ्नो सखीका प्रियतम रहेछन्।

चित्रलेखा अनिरुद्धलाई हरण गर्न भनी द्वारिका आइन् तर उहाँ सुदर्शन चक्रले पालो दिइराखेको रहेछ। उनी विचार गर्न थालिन् 'अब के गर्ने होला।' यत्तिकैमा नारदजी आइपुग्नुभयो अनि चित्रलेखाले उहाँसँग भनिन्, 'महाराज तपाईं साधु हुनुहुन्छ। अरूहरूको साधना पूर्ण गर्ने मात्र साधु हो। म चोरी गर्न भनी हिंडेकी छु, तपाईं पनि मेरा साथ हिँड्नुहोस्।'

नारदजीले सोधेपछि चित्रलेखाले भनिन् 'म अनिरुद्धको चोरी गर्न गइरहिछु।'

चोरी गर्नु छ भने अनिरुद्धकै चोरी गर्नू। अनिरुद्ध मनका स्वामी हुन्। चित्रलेखा हुन् चित्र-विचित्र सङ्कल्प गर्नेवाली बुद्धि। अनिरुद्ध मनको स्वरूप हो। बुद्धि ( चित्रलेखा )-ले मन ( अनिरुद्ध )-लाई हर्न गइरहेछिन्, तर उनलाई सफलता तब मात्र मिल्छ जब नारद अर्थात् ब्रह्मचर्यबाट सहायता मिल्छ। बुद्धि मनबाट टाढ़ा छ। ब्रह्मचर्यको साथ पाए मात्र उनले मनलाई नियन्त्रित गर्न सक्छिन् यदि ब्रह्मचर्य ( संयम )-को पालन गर्छौ भने मन वशमा हुनेछ।

नारदजीले सुदर्शनसँग कुरा गर्न खोज्नुभयो तब उसले भन्यो 'मलाई फुर्सद छैन, सारा नगरको पहरा गर्नु छ नि।' नारदजीले भन्नुभयो—ठीक छ तर तिमीले सत्सङ्ग पनि गर्नुपर्छ। तिमी कसको रक्षा गर्छौ ? रक्षक तर हुन् श्रीकृष्ण। तिमी अज्ञानी छौ। सत्सङ्गबाट मात्र तिम्रो अज्ञान मेटिन सक्छ।

यस प्रकार नारदजीले सुदर्शनलाई कुरामा अल्मल्याइदिँदा चित्रलेखाले अवसर पाएर अनिरुद्धको आवासमा प्रवेश गरिन्। आफ्नो योग विद्याका बलद्वारा उनले अनिरुद्धलाई पलंग सहित उड़ाएर लगिन् तर उनको एउटा पुष्पमाला तल खस्यो जो सौझै सुदर्शनमाथि पऱ्यो। सुदर्शनले जब माथि हेऱ्यो तब विमान गइरहेको थियो। उसले नारदजीलाई सोध्यो—'अरे यो के ? कोही भागेर गएन ?'

नारदजी—'तिमीलाई निरर्थक यस्ता विचार कसरी आइरहन्छन्। मलाई कथा भन्नमा केही आपत्ति छैन तर आफ्नो स्वामीको आज्ञा विना सत्सङ्ग गर्नु ठीक छैन। हुनसक्दछ, केही चोरी भयो पनि होला। तिमी गएर हेर। अँ, मेरो नाउँ नभने। नारायण, नारायण भन्दै नारदजी, त्यहाँबाट हिँड्नुभयो।'

प्रातःकालमा जब अनिरुद्धको आँखा खुल्यो तब उनले अपरिचित महल देखे।

यता द्वारिकामा पनि गड़बड़ी मच्चियो। श्रीकृष्णले सुदर्शनलाई बोलाएर हप्काउनुभयो। उसले भन्यो—म नारदजीका साथ सत्सङ्ग गरिरहेको थिएँ त्यसै समयमा अनिरुद्धलाई कसैले उड़ाएर लग्यो होला। भगवान्‌ले भन्नुभयो—तेरो काम पालो पहरा दिनुपर्ने हो वा सत्सङ्ग गर्नुपर्ने थियो।

जबसम्म नारदजी ( ब्रह्मचर्य )-को साथ हुँदैन, बुद्धि ( चित्रलेखा ) अनिरुद्ध ( मन )-लाई हरण गर्न सक्दिन।

चित्रलेखाले अनिरुद्धलाई उषाको आवासमा लिएर आइन्। वाणासुरले सम्पूर्ण कुरा थाहा पाएर अनिरुद्धलाई कारागृहमा थुनिदियो। कृष्णले सबै कुरा थाहा पाउनुभयो र सेना लिएर शोणितपुर आउनुभयो।

वाणासुर शिवजीको सेवक भएको हुनाले श्रीकृष्णले उसको वध गर्नुभएन तर उसलाई सहस्रवाहुको साटो चतुर्भुज बनाइदिनुभयो।

उषा र अनिरुद्धको विवाह भयो।

सकाम कर्मले पापहरूको नाश गर्दैन—केवल प्रभुको हितका निमित्त गरिएको सत्कर्मले मात्र पापहरूको नाश गर्न सक्दछ।

नृगराजाले सत्कर्म मात्र गरेका थिए तर सकाम गरेका हुनाले उनको पापको नाश हुन सकेन। ब्राह्मणलाई दान गरिदिएको गाईलाई उनले फेरि दान गरिदिएकाले उनलाई छेपारोको जन्म लिनुपऱ्यो। प्रभुले उसको उद्धार गरिदिनुभयो।

दान गरेको वस्तु फेरि फर्काएर लिनु हुँदैन। देवधनको उपयोग विलासका निम्ति नगर्नु।

आनन्द रामायणमा एउटा प्रसङ्ग छ। रामचन्द्रले भन्नुभयो एउटा कुकुर रोइरहेछ। उहाँले लक्ष्मणलाई के कारण रहेछ बुझ्न पठाउनुभयो। लक्ष्मणले कुकुरलाई बोलाएर रुनाको कारण सोध्नुभयो। उसले भन्यो—'मलाई एउटा संन्यासीले ढुङ्गा हानेको छ।' त्यस संन्यासीलाई बोलाएर ढुंगा कति कारणले हानेको हो भनी सोधनी भयो।

संन्यासी—म भिक्षा लिएर गइरहेको थिएँ तब यो कुकुर मेरो पछि लाग्यो। मैले विचार गरें यसले छोयो भने म बिटुलिन्छु भनी धपाउनलाई मैले ढुङ्गा हानेको हुँ।

रामचन्द्रजी—तिमीले संन्यास लिनामा अलि छिटो गरेछौ। कुकुर पशु हो। तिमी मनबाट संन्यासी हुन सकेका रहेनछौ। यस कुकुरले जे पनि दण्ड देला, त्यो भोग्नुपर्ने छ।

कुकुरलाई दण्ड दिनुभन्दा कुकुर भन्छ—प्रभु, यस संन्यासीलाई लाखौं आम्दानी हुने मन्दिरको महन्त बनाइदिइयोस्।

सबैले विचार गरे कुकुरले दण्ड दिइरहेको छ वा पुरस्कार।

कुकुरले स्पष्ट गरी भन्यो—पूर्व जन्ममा म एउटा ठूलो मन्दिरको महन्त थिएँ। मैले देवधनको उपभोग विलासका निमित्त गरें। त्यसैले यस जन्ममा कुकुर बन्नुपऱ्यो र ढुङ्गाको चोट पनि पाएँ।

देवधन, मनीषी, ब्राह्मणहरूको, सन्तहरूको धन खाने चेष्टा कहिल्यै नगर्नु। साँच्चिकैको ब्राह्मण प्रभुलाई प्रिय हुन्छ। उसको अपमान नगर्नु। आज यदुवंशीहरू सन्तहरूको अपमान गरिरहेछन्।

बलरामले वनमा द्विविद वानर, पौण्ड्रक तथा काशीराजको वध गरे।

शुकदेवजीले दुर्योधनकी कन्या लक्ष्मणासँग शाम्बको विवाहको प्रसङ्ग पनि भनिदिनुभयो। नारदजीको परिहासको प्रसङ्ग पनि सुनाउनुभयो—

ब्रह्मचारीलाई जरूरी छ उसले गृहस्थको संसार हेर्ने इच्छा नगरोस्। तर नारदजीलाई श्रीकृष्णको संसार हेर्ने इच्छा भयो। श्रीकृष्ण सोह्र हजार एकसय आठ रानीहरूका साथ कस्ता प्रकारले व्यवहार चलाउनु हुँदो हो ? उहाँ कहिले कसका साथ भोजन गर्नुहुँदो हो, विहार गर्नुहुँदो हो ? द्वारिका आएर उहाँले कृष्णको महलमा प्रवेश गर्नुभयो। त्यस समय श्रीकृष्ण रुक्मिणीसाथ हुनु हुन्थ्यो। उहाँले नारदजीको स्वागत गर्नुभयो।

श्रीकृष्णले नारदजी आएको कारण थाहा पाए तापनि सोध्नुभयो—'भन्नुहोस् महाराज, किन आगमन भएको हो तपाईंको ?'

स्वयं प्रभु भए तापनि संन्यासी नारदको पाउ धुनुभयो। श्रीकृष्ण जस्तो गृहस्थ र संन्यासी आजसम्म कोही भएको छैन। उहाँले आफ्नो गृहस्थ धर्मपालन गर्नका निमित्त नारदजीको पूजा गर्नुभयो।

त्यहाँबाट नारदजी भगवान्को दोस्रो आवासमा आउनुभयो। वहाँ श्रीकृष्ण उद्धवका साथ पासा खेल्न लागेको देखिनुभयो। त्यहाँ पनि श्रीकृष्णले उनको राम्ररी स्वागत गर्नुभयो।

यस प्रकार नारदजी एक अर्को आवासमा जानुभयो। त्यहाँ पनि उहाँले कहीं कृष्ण बालकहरूका साथ खेलिरहेका, कहीं भोजन गरिरहेका, कहीं सुतिरहेका, कहीं जप गरिरहेका भेट्टाउनुभयो। एउटा आवासमा उहाँ कथा सुनिरहेका देखिनुभो।

जस्ता प्रकारले घरलाई प्रतिदिन बढारेर सफा राख्नु आवश्यक छ, सोही प्रकारले प्रतिदिन सत्सङ्गबाट मनलाई शुद्ध गर्नु पनि आवश्यक छ।

नारदजी जहाँ पनि जानुहुन्थ्यो श्रीकृष्णलाई घर-गृहस्थीको काममा व्यस्त भेट्टाउनु हुन्थ्यो। जब हिँड्दा-हिँड्दा थाक्नुभयो विचार गर्न थाल्नुभयो कुनै आवासमा जलपान गर्न पाए असल हुँदो हो भन्ने लाग्यो।

जुन कुनै आवासमा जानुहुन्थ्यो कृष्ण उहाँलाई सोध्नुहुन्थ्यो कहिले आउनु भएको ? कति घण्टादेखि वहाँ घुमिरहनु भएको थियो र पनि भन्नुपर्‍यो भर्खरै आएको।

त्यो तर महायोगेश्वरको माया थियो। भगवान्ले भन्नुभयो—'नारदजी, म तिम्रो पूजा गर्छु, यसको अर्थ यो होइन तिमी मभन्दा ठूला हौ, मैले गृहस्थ धर्मको पालनका निमित्त मात्र पूजा गरिरहेछु। त्यसो तर तिमी मेरा नाति हौ किनभने तिम्रा पिता ब्रह्मा, मेरा पुत्र हुन्। मेरो वैभव देखेर तिमीलाई आनन्द लाग्नु पर्ने हो।'

नारदजीले भगवानसँग क्षमा-प्रार्थना गर्नुभो।

भगवान् गृहस्थका सामुन्ने आदर्श देखाउनु हुन्छ सन्तहरूलाई, पवित्र ब्राह्मणहरूलाई आदर गर।

यस प्रसङ्गबाट एउटा उपदेश यो पनि पाइन्छ ब्रह्मचारीले गृहस्थको घरमा चियो-चर्चा गर्नु हुन्न। शरीरबाट ब्रह्मचर्यको पालन सजिलो छ, तर दृष्टि र मनबाट ब्रह्मचर्यको पालन गर्नु बड़ो कठिन छ। गृहस्थको जीवन-व्यापारको विचार गर्नाले ब्रह्मचर्य भंग हुने सम्भावना हुन्छ।

सत्रौं अध्यायमा भगवान्को दिनचर्याको वर्णन छ। उहाँ ब्राह्ममुहूर्त्तमै शैय्या छोड्नुहुन्थ्यो, स्नानादिबाट निवृत्त भएर त्रिकाल सन्ध्या, गायत्री जप, दान आदि गर्नुहुन्थ्यो र फेरि व्यावहारिक कामकाज गर्नुहुन्थ्यो।

द्वारिकामा आज पनि भगवान् दुइ पटक सन्ध्या गर्नुहुन्छ। उहाँ सन्ध्योपासना, माता-पिताको पूजा, गरीबहरू र ब्राह्मणहरूलाई दान आदि पनि दिनुहुन्थ्यो। गाईको सेवा पनि गर्नुहुन्थ्यो।

गृहस्थलाई आवश्यक छ उसले प्रतिदिन सन्ध्या, पूजा, गाई र गरीबहरूको सेवा आदि गरोस्।

एक पटक नारदजीले भगवान्सँग विन्ती गर्नुभयो जरासन्धद्वारा बन्दी भएका राजाहरूलाई मुक्त गरिदिनुहोस्। उसै समय युधिष्ठिरका तर्फबाट निम्ता आयो 'राजसूय यज्ञमा सवारी होस्।' भगवान्ले विचार गर्न थाल्नुभयो 'पहिले कुनचाहिँ काम गरौं?' नारदजीले भन्नुभयो 'पहिले यज्ञमै जानुहोस्।'

राजसूय यज्ञका समयमा भीमले दुर्योधनको अपमान गरेको थियो अन्धाको पुत्र अन्धै हुन्छ भनेर। यस कर्कश वाणीले कलहको आरम्भ भयो जसको अन्तिम परिणति महाभारतको दारुण युद्ध भयो।

पाण्डवहरू वनवासका समय गुजरातमा थिए। संखेडाको नजिकै पञ्चेश्वर महादेवका नजिकै उनीहरू बस्थे। वर्तमान धोलको शहर प्राचीन विराट नगरी थियो।

राजसूय यज्ञका निमित्त योद्धाहरूको नाश भयो तर जरासन्ध बाँकी रह्यो। ऊ महान् शिवभक्त थियो, उसलाई जित्नु सजिलो थिएन। त्यसकारण भगवान्ले युक्ति गर्नुभयो। वहाँ स्वयं अर्जुन र भीमका साथ ब्राह्मणको भेष धारण गरेर जरासन्धकहाँ जानुभयो।

जरासन्ध ब्राह्मणहरूलाई भोजन नगराईकन आफू भोजन गर्दैनथ्यो। त्यसकारण उसले यी ब्राह्मणहरूलाई दान माग भन्यो। श्रीकृष्णले भीमलाई देखाएर भन्नुभयो, यी मेरा शिष्य हुन्, द्वन्द्व युद्ध गर।

सत्ताइस दिन भयो युद्ध गरेको तर जरासन्ध मर्दै-मर्दैन थियो। भीमले श्रीकृष्णलाई भन्न थाले—'तपाईंहरू दुइ जना खाइ-पिइकन मोज गर्दै हुनुहुन्छ र यता लड्दा-लड्दा मेरो शरीर थिलथिलो भइरहेछ।'

श्रीकृष्ण—'जरासन्ध मर्न सक्दैन किनभने लड्दाखेरि तिमी मतर्फ हेर्दै हेर्दैनौ। लड्दाखेरि मतर्फ हेर्नू, म जो जुक्ति बताउने छु, त्यसै गरेपछि ऊ मर्नेछ।'

अर्जुन जीवात्मा हो।

भीम प्राण हो।

श्रीकृष्ण परमात्मा हुनुहुन्छ।

वृद्धावस्थामा प्राण व्याकुल हुन जान्छ। जरावस्थामा प्राण यदि श्रीकृष्णका तर्फ गऱ्यो भने त्यो भीमजस्तै जरालाई मार्ने हुनेछ।

प्राण यदि परमात्माका सम्मुख हुन पायो र प्रतिश्वास उनकै स्मरण गर्दै रह्यो भने जरासन्ध मर्न सक्छ। जन्म-मृत्युको पीड़ा भनेकै जरासन्ध हो।

जरासन्धको वध गराएर प्रभुले सबै राजाहरूलाई मुक्त गराउनु भयो।

राजसूय यज्ञको आरम्भमा श्रीकृष्णको पूजा सर्वप्रथम गरियो शिशुपाल ईर्ष्याले चूर भयो। ऊ श्रीकृष्णलाई अपशब्द बोल्न थाल्यो तब भगवान्‌ले सुदर्शन चक्रद्वारा उसको शिरच्छेदन गरेर उसको उद्धार गरिदिनुभयो। सबैलाई आनन्द भयो तर दुर्योधन अट्टी लिन लाग्यो। यस्तो व्यक्तिको पनि नाश शीघ्र भइहाल्छ।

शिशुपाल अर्थात् क्रोध। भगवान्‌ले शिशुपाल ( क्रोध )-लाई सुदर्शन चक्रद्वारा नाश गर्नुभयो। क्रोधलाई नाश गर्नेवाला ज्ञान मात्र हो।

दुर्योधनले कपटद्वारा पाण्डवहरूलाई जुवामा हरायो। पाण्डवहरूले विराटनगरमा अज्ञातवास गरे, वनवास समाप्त भएपछि पाण्डव-कौरवहरूको युद्धको प्रसंग आयो।

बलरामले सोचे उनलाई पनि कुनै एक पक्षका तर्फबाट लड्नुपर्ने छ, त्यसकारण उनी तीर्थयात्रा गर्न निस्के।

घरमा जहिले पनि मतभेद भयो, मन दुख्यो भने तीर्थयात्रा गर्न जाऊ।

शुकदेवजीले बलरामको तीर्थयात्राको पनि बड़ो राम्रो वर्णन गर्नुभएको छ।

शुकदेवजीले सुदामा-चरित्र पनि सुनाउनुभयो। यो चरित्र भगवान्‌को एक महत्वपूर्ण अंश हो।

भागवतको कथा भन्दा-भन्दै दुइपटक शुकदेवजी समाधिस्थ हुनुभएको थियो। त्यस समय अन्य ऋषिहरूले वेदमन्त्रोच्चारणबाट उनलाई सचेत गराएका थिए।

शुकदेवजीका समाधिका ती दुइ कारण यसप्रकार थिए।

( १ ) श्रीकृष्णले गोपबालक, गाई, बाच्छाहरूको रूप लिएर ब्रह्मालाई आफ्नो मायाको दर्शन गराएका थिए, त्यस प्रसङ्गको वर्णनका समय।

( २ ) सुदामा चरित्रको कथनका समय।

राजा परीक्षित् सुदामा चरित्रको आरम्भको समयमा शुकदेवजीलाई भन्नुहुन्छ—'यस कृष्णकथालाई जति सुन्दै जाँदा पनि तृप्ति हुनैसकेको छैन।'

त्यही वाणी धन्य हो, जो भगवान्‌को गुण वर्णन गर्छ। त्यही हात साँचो हो, जसले भगवान्‌को सेवा गर्छ। त्यही मन साँचो मन हो, जसले स्थावरजङ्गम सबैमा व्याप्त प्रभुको स्मरण गर्दछ। त्यही कान साँचो कान हो जो भगवान्‌को पवित्र कथाको श्रवण गर्दछ।

शुकदेवजीले वर्णन गर्नुभइरहेछ।

पोरवन्दर निवासी महाज्ञानी, जितेन्द्रिय, निष्किञ्चन र पवित्र ब्राह्मण सुदामा श्रीकृष्णका परम मित्र थिए उनी सारा दिन प्रभुसेवामा बिताउँथे र अयाचक व्रतको पालन गर्थे।

ज्ञानको फल धन या प्रतिष्ठा होइन, परमात्मासँगको मिलन हो। विद्याको उपयोग केवल अर्थोपार्जनका निमित्त गर्नु ठीक होइन।

सुदामा आफ्नो विद्याको उपयोग भोगका निमित्त होइन भगवान्‌का निमित्त गर्थे।

सुदामाको घर दरिद्रताको राज्य थियो। उनकी पत्नीको नाउँ थियो सुशीला।

आज तर नाउँको विपरीत गुणलाई हेर्छन्। शान्ति बहिनी कर्कशा हुन्छे, गङ्गा बहिनी पिउने पानीसम्म दिन्न।

सुशीलासङ्ग एउटै वस्त्र थियो। उनी महापतिव्रता थिइन्।

धन सम्पत्तियुक्त पतिसँग प्रेम गर्ने पत्नीको कुनै बराबरी छैन। लाउनलाई वस्त्र, खानलाई अन्न नभएमा पनि पतिसँग प्रेम गर्दै रही भने उही पत्नी सच्चा पत्नी हो।

सुशीलालाई कति दिनसम्म भोकै बस्नुपर्थ्यो, तैपनि उनी कष्ट मान्दिनथिन्। उनी कहिल्यै सुदामासँग यस्तो भन्दिनथिन् विद्वान् भएर पनि किन कमाउँदैनौ। यदि कुनै साधारण स्त्री भएकी भए सुदामालाई भन्ने थिई कामकाज गर्नु थिएन भने मसँग बिहा गरेर मेरो जीवन किन बिगारिदियौ ?

पति यदि धन-सम्पत्ति, सुख-सुविधा दिन्छ र पत्नी यस्तो पतिको सेवा गर्छे भने त्यसमा केही आश्चर्य छैन। यस्ती पत्नीलाई धन्य छ जो दरिद्र पतिलाई पनि परमेश्वर मानी सेवा गरिरहन्छे। पति-पत्नी सँगसँगै बसेर पनि कृष्ण-कीर्तन, प्रभुसेवा गर्दै रहेमा यस्तो गृहस्थाश्रम संन्यासाश्रम भन्दा पनि श्रेष्ठ छ।

सुशीला पतिसँग प्रभुकथा सुन्ने गर्थिन्। कतिपटक बालकहरूले पनि खान पाउँदैनथे। सुशीलाले आफ्ना सन्तानहरूको दुर्दशा हेर्न सकिनन्। एक दिन उनले व्याकुल भएर आफ्नो प्रतिसँग भनिन्—तपाईंसँग एउटा प्रार्थना गर्नु छ। तपाईं कथामा भन्नुहुन्छ कृष्णलाई आफ्ना मित्रसँग बड़ो प्रेम छ। मित्रहरूका निमित्त चोरी पनि गर्थे।

सुदामा—अँ, साँच्चै कुरा हो। उनी आफ्ना मित्रहरूलाई ख्वाएर मात्र खान्थे।

सुशीला—त्यसो भए किन उहाँसँग भेटेर यो आफ्नो दुःख दूर नगर्ने ?

सुदामा—'म दरिद्र छु। म उहाँ गएँ भने मानिसले यो ब्राह्मण भीख माग्न आयो भन्लान्। मेरो नियम छ परमात्मासँग केही पनि माग्न नजाने।'

सुशीला—'मैले तपाईंलाई माग्न भनी पठाउन आँटेकी होइन। उहाँ हजार आँखावाला हुनुहन्छ। आफैं सबै कुरा बुझिहाल्नुहुने छ। केवल उहाँको दर्शनसम्म गरेर आउनुहोस्।'

सुदामा—'मलाई त्यहाँ जाने समय छैन।'

सुशीला—'उहाँ गएर भगवान्‌को दर्शनसम्म गरेर आउनुहोस्।'

सुदामा—'म यहाँ बसेरै पनि मनबाट सदा उहाँको दर्शन गरिरहन्छु। शारीरिक मिलनभन्दा मानसिक मिलन बड़ो सुखदायी हुन्छ।'

सुशीला—'दर्शन कहिले प्रत्यक्ष पनि गर्नुपर्छ। तपाईंको प्रतिज्ञा छ कुनै जीवको ढोकामा नजाने। श्रीकृष्ण तर परमात्मा हुनुहुन्छ। उहाँको द्वार सबैका निमित्त खुला छ। त्यहाँ जानलाई कत्रो सङ्कोच ? मित्रसँग भेट गर्नैपर्छ।'

ज्ञानी र तपस्वी सुदामाले घर बसीबसी कृष्णको दर्शन गर्दथे तर पत्नीको अति आग्रहका कारण द्वारिका जान तयार भए। उनले सोचे 'पत्नी मेरा सबै कुरा मानिहाल्छिन् भने मैले पनि उनको कुरा मान्नुपर्छ। उनले दुलहीलाई भने—'कल्याणी, मित्रसँग भेट्न गइरहेछु, तर खाली हात जानमा मेरो कुनै शोभा भएन।'

घरमा केही थिएन, त्यस कारण सुशीलाले छिमेकीको घरबाट दुइ मुट्ठी कनिका मागेर ल्याइन्। धन्य छ सुशीलालाई। उनले ती कनिका घरमा नराखेर सबै एउटा टालोमा बाँधेर भगवान्का निमित्त दिँदै भनिन्—यस्तो भेट दिनमा तपाईंलाई संकोच लाग्ला तर भन्नु भाउज्यूले पठाएको हो।

पत्नीको आग्रह र प्रभुदर्शनको इच्छाले सुदामा द्वारिकातर्फ हिँड़े। फाटेको धोती, एक हातमा लट्ठी र काखीमा कनिकाको पोको थियो।

सुशीला सोच गर्न थालिन् 'कति दिनदेखि भोका मेरा पति त्यहाँसम्म कसरी पुग्न सक्लान् ? मैले उहाँलाई जानका निमित्त विवश गरेकी थिएँ। अरू कुनै उपाय पनि थिएन। आफ्ना बालकहरूको दुर्दशा हेर्न पनि सकिँदैन थियो।' उनले सूर्यनारायणसङ्ग प्रार्थना गर्न थालिन्—'मेरा पतिको रक्षा गरिदिनुहोस्।'

सुदामा पौषशुक्ल पूर्णिमाका दिन द्वारिका गए। अतिशय जाड़ोले गर्दा उनको शरीर काँपिरहेको थियो। सात दिनदेखि भोका दुर्बल सुदामा दुइ कोश हिँड्दैमा थाके। उनी विचार गर्दै हिँड्दै छन् द्वारिकानाथजीको दर्शन हुने हो वा कि होइन। बाटामा दुर्बलता र चिन्ताका कारण उनी मूर्च्छा परे।

उता द्वारकाधीशलाई समाचार आयो सुदामा आइरहेछन्। उहाँले विचार गर्नुभयो। यस्ता निष्ठावान्, सदाचारी, अयाचक तपस्वीलाई हिँड़ाउनु मलाई शोभा दिँदैन। उहाँले गरुड़जीलाई पठाउनुभो। गरुड़ले सुदामालाई आकाशमार्गद्वारा द्वारिकानगरसम्म ल्याइदिए। सुदामाले मानिसहरूलाई सोधेर थाहा पाए उनी द्वारिका आइपुगेछन्। उनले सोचे अब द्वारिका धेरै टाढ़ा छैन। बिहानदेखि निस्किएको हुँ र बेलुकासम्ममा यहाँ आइ पनि पुगें। उनलाई थाहै थिएन गरुड़जीले उड़ाएर ल्याइदिएको।

भगवान्का निमित्त अब दस कदम अगाडि बढ़, उहाँ बीस कोस हिँड़ेर तिमीसङ्ग भेट्न आउनु हुनेछ।

सुदामा मानिसहरूसँग द्वारिकाधीशको प्रासादको बाटो सोद्धछन् 'उहाँ मेरो मित्र हुनुहुन्छ।' सुन्नेहरू हाँसेर भन्छन्—यस्तो माग्ने पनि द्वारिकाधीशको मित्र हुन सक्छ ?

सुदामा प्रभुस्मरण गर्दै भगवान्को द्वारमा आइपुगे। द्वारपालले उनलाई माग्ने भन्ठानेर रोक्दै भन्न लाग्यो—'जे भन्नु छ मलाई भन।' जे चाहिन्छ मसँगै माग। तिमी भित्र जान पाउँदैनौ।

सुदामा—'म द्वारिकाधीशसँग केही माग्न आएको होइन, भेट गर्न आएको हुँ। उहाँ मेरो मित्र हुनुहुन्छ।'

विशुद्ध प्रेम केवल दिन्छ मात्र केही माग्ने इच्छा हुँदैन।

द्वारपाल हाँस्न लाग्यो—'के यस्तो माग्ने केही पाउने इच्छा नगरिकनै आएको होला ?'

सुदामा—'तिमीले कृष्णलाई गएर भनिदेऊ उनको मित्र सुदामा उनीसँग भेट्न आइरहेछन्।'

सेवक भित्र गयो र प्रणाम गरेर प्रभुलाई भन्न थाल्यो—आँखा भित्र गड़ेका छन्। हाड़हरू देखिन्छन्, फाटेको लुगा छ। मुखमा दिव्य तेज छ, ऊ हामीसँग केही पनि लिन चाहँदैन। ऊ भन्छ 'कृष्णाको मित्र सुदामा हुँ र भेट गर्न आएको छु।'

सुदामा शब्द सुन्नासाथ भगवान् द्वारतर्फ दगुर्नुभो।

ढोकामा उभिरहेका सुदामा विचार गर्न थाले 'आजसम्म उनको मनमा आफूले ज्ञान-तपको तथा कसैको ढोकामा नजाने अभिमान गरेको थिएँ, सुशीलाले त्यो अभिमान तोड़िदिइन्।'

सुदामा फाटेका लुगा लाएका थिए, लुगा धुस्रो र फुस्रो थियो तर उनको हृदय अत्यन्त स्वच्छ र पवित्र थियो।

भगवान् मानवको वस्त्र होइन हृदय हेर्नु हुन्छ। जीव यदि आफ्नो जीवत्व, अहं बिर्सिदिन्छ भने ईश्वर पनि आफ्नो ईश्वरत्व एकतर्फ राखिदिनुहुन्छ।

भगवान् सुदामालाई बोलाउँदै दगुरेर द्वारमा आउनुभयो। उहाँका रानीहरूलाई आश्चर्य भयो आजसम्म कतिकति मानिस उहाँसँग भेट गर्न आए तर उहाँ कहिल्यै यसरी विह्वल हुनुभएको थिएन।

श्रीकृष्णले सुदामालाई आफ्नो हृदयमा लगाउनुभयो। आफ्नो मित्रको यस्तो दयनीय दशा देखेर उहाँलाई चित्त दुख्यो। 'मैले स्वयं मित्रलाई भेट्न र दशा जान्न जानुपर्ने थियो। मित्र, बेशै भयो तिमी यसतर्फ आयौ।'

सुदामाले विचार गरे—वैभव प्राप्त भए पनि कृष्णले मलाई बिर्सेको रहेनछ। सम्पत्तिको नशामा आफ्नो भान बिर्सनेलाई ईश्वर भन्न सकिन्छ ?

रुक्मिणी चरण धुनलाई जल ल्याइरहेकी थिइन्। कृष्णले आफ्नो अश्रुजलले सुदामाको चरण धोइदिनुभयो। नरोत्तम कवि लेख्छन्—

**देखि सुदामाकी दीन दसा, करुना करिके करुनानिधि रोये।**
**पानी परातको हाथ छुयो नाहिं, नैननके जलसों पग धोए॥**

तपस्वी सुदामाका गोड़ामा जुत्ता थिएन। त्यसैकारण गोड़ामा धेरै काँड़ा बिझेका थिए। श्रीकृष्ण काँड़ा झिक्न थाल्नुभयो। एउटा काँड़ा ननिस्किएकाले प्रभुले रुक्मिणीलाई सियो ल्याउन भन्नुभयो। रुक्मिणीले अबेर गरेपछि प्रभुले आफ्नै दाँतले सो काँड़ा निकाल्न थाल्नुभयो। सुदामाले भने 'हरे प्रभु ! यो तपाईं के गरिरहनुभएको छ ? कहीं रानीहरूले देखे भने ? राजाधिराज भएर यसप्रकार काँड़ा झिक्न तपाईंलाई शोभा दिँदैन।'

कृष्ण—'तपाईं पनि कस्तो कुरा गरिरहनुभएको छ ? तपाईंको कृष्ण सम्पत्तिवान् भए पनि विवेक-भ्रष्ट भएको छैन।'

श्रीकृष्णले आज बिर्सनुभएको छ—उहाँ परमात्मा हुनुहुन्छ, राजाधिराज हुनुहुन्छ। उहाँले काँड़ा झिकिदिनु भो। सुदामा गरीब थिए, तर निष्पाप र पवित्र थिए। त्यसकारण भगवान्ले उनको त्यस्तै सेवा गर्नु भो।

दरिद्र हुनु अपराध होइन, दरिद्रतामा भगवान्लाई बिर्सनु अपराध हो।

सुदामा स्नानादिबाट निवृत्त भए। उनलाई पहिरन पीताम्बर दिइयो। भोजन विधि पनि भयो। सुदामालाई पलङ्गमाथि राखेर श्रीकृष्ण उनको चरणसेवा गर्न थाल्नुभो।

श्रीकृष्ण—'मित्र, बाटामा तपाईंलाई बहुतै कष्ट भयो होला। साँच्चै भन्छु, म यस सांसारिक जञ्जालबाट आत्तिइसकेको छु। आफ्नो गुरुकुलका दिनको जस्तो आनन्द अब कहाँ ?'

प्रकृतिधर्म आफ्नासाथ वासना-विकार पनि लिएर आउँछ। त्यसकारण भगवान् निवृत्त हुनलाई इच्छा गरिरहनुभएको छ।

'मित्र सुदामा ! बालककालमा तपाईंलाई खेल्ने बानी पनि थिएन। म तपाईंलाई कर गरेर लैजाने गर्थें, त्यो दिन पनि मलाई सम्झना छ जब हामी समिधा लिन गएका थियौं, मुसलधारे पानी परेको थियो र हामीलाई एउटा वृक्षको आड़मा ओत लाग्नुपरेको थियो।'

त्यस दिन सुदामाका साथ केही चना थियो। उनी एकलैले खान लागे। खाएको शब्द सुनेर कृष्णले सोध्नुभयो—तपाईं के खाइरहनु भएको ? सुदामाले विचार गरे यदि साँचो भनौं भने कृष्णलाई पनि केही चना दिनुपर्ला ? त्यसकारण उनले भने खाएको होइन। यो जाड़ाले गर्दा दाँत कटकटाएको। एक्लै खानेले दरिद्र रहनुपर्छ। सुदामालाई यसै कारणले दरिद्र हुनुपर्‍यो।

श्रीकृष्णले सुदामाको चरणसेवा गरेको देखेर रानीहरूलाई बड़ो आश्चर्य भयो। आजसम्म पतिले यस्तो प्रेम कसैलाई पनि देखाउनुभएको छैन। यी ब्राह्मण बड़ो भाग्यशाली छन्।

कृष्ण—'बिहा गरेको छ छैन ? मेरी भाउजू कस्ती हुनुहुन्छ ?'

सुदामा—'पत्नी सुशीला हो र सन्तान पनि छन्।'

सुदामाले सबै कुरा भने तर आफ्नो दरिद्रताको बारेमा केही भनेनन्।

'तपाईंकी भाउजूको इच्छा र अनुरोधबाटै म तपाईंलाई भेट्न आएको हुँ।'

श्रीकृष्ण—'भाउजू सुपात्र हुनुहुँदो रहेछ। उहाँले मलाई केही अवश्यै पठाउनुभएको होला ?'

लक्ष्मीले बीचमा भनिन्—'यदि तपाईंको आज्ञा भए म तपाईंका यी मित्रको घरमा केही पठाइदिऊँ।'

कृष्ण—'म दिन जान्दिनँ, यीबाट लिन चाहन्छु।'

लक्ष्मीजी—'यी दरिद्र ब्राह्मणले तपाईंलाई के देलान्।'

श्रीकृष्णलाई नराम्रो लाग्यो। 'मेरा मित्रलाई दरिद्र भन्ने तिमी को हौ ?' लक्ष्मीजीले विचार गरिन् 'श्रीकृष्णको आज स्वभाव भिन्नै भएको छ।' उनले प्रभुसँग क्षमा मागिन्।

सुदामाले कनिकाको पोको सङ्कोचवश लुकाइराखेका थिए। भगवान् मनमनै हाँसेर भन्नुहुन्छ 'त्यसदिन पनि चना लुकाएको थियो र आज कनिका लुकाइरहेछन्। जसले मलाई दिँदैन उसलाई म पनि दिन्नँ। त्यसकारण मैले खोस्नै पर्ने भो।'

भगवान्‌ले कनिकाको पोको खोस्नुभयो।

**स्वयं जहार किमिदमिति पृथुकतण्डुलान्।**

(भा० १०-८१-८)

लौकिक दृष्टिबाट तर दुइ मुट्ठीभर कनिका थियो, तर सुदामाको त्यो सर्वस्वनै थियो। सुदामा प्रारब्धकर्मानुसार दरिद्र थिए। विधाताले उनको निधारमा लेखेको थियो— श्रीक्षयः। जब श्रीकृष्णले उनका निधारमा तिलक लगाइदिन थाल्नुभयो तब उहाँले त्यो विधाताको लेख पढ्नुभयो र त्यसलाई उल्टाइ पनि दिनुभयो—'यक्षश्रीः। जो सम्पत्ति कुबेरसँग पनि छैन त्यो सम्पत्ति म सुदामालाई दिनेछु।' भगवान्‌ले सुदामाका प्रारब्ध कर्महरूलाई क्षीण गराउनका निमित्त कनिका खाइदिनुभयो। उहाँले कनिकाको आहारा गरिदिँदा उहाँद्वारा सारा विश्वले आहारा गर्‍यो। किनभने उहाँ सर्वात्मा हुनुहुन्छ। श्रीकृष्णले सारा विश्वलाई अन्नदान गर्नेको पुण्य सुदामालाई दिनुभयो।

श्रीकृष्ण सुदामासँग भन्नुहुन्छ— 'गोकुलमा मेरी माताले मलाई यस्तै किसिमबाट कनिका ख्वाउनुहुन्थ्यो।' यशोदाको संझनाले गर्दा भगवान्‌का आँखामा आँसु आयो। सुदामाका कनिका प्रेमरसले भिजेका थिए। एक मुट्ठी कनिकाको साटोमा भगवान्‌ले समग्र द्वारिकाको ऐश्वर्य सुदामाको घर पठाइदिनुभयो।

सुदामाले आफ्नो दारिद्र्यको कथा भगवान्‌सँग भनेनन्। त्यसकारण भगवान्‌ले पनि ऐश्वर्यदानको कुरा सुदामालाई भन्नुभएन।

सुदामा भोलिपल्ट आफ्नो गाउँतर्फ हिँड्ने तयारी गर्न थाले। उनले विचार गरे 'कृष्ण अरू दुइ चार दिन बस भन्नुहुन्छ कि ?'

तर भगवान्‌ले आग्रह गर्नुभएन। कारण उता सुशीला सारा वैभव पाएर पनि व्रत लिएर बसिरहेकी छन् 'पतिको मुखदर्शनविना भोजन नगर्ने।' भगवान्‌ले सोच्नुभो, 'यदि सुदामालाई जान दिइनँ भने भाउज्यूले त्यतिञ्जेलसम्म भोकै बस्नुपर्ला त्यसकारण उहाँले आग्रह गर्नुभएन।'

निरपेक्ष पवित्र सुदामा आफ्नो पुरानो धोती लाएर जान तयार भए। जाँदा-जाँदै पनि उनले केही मागेनन्। श्रीकृष्ण द्वारसम्म उनलाई पुर्‍याउन जानुभयो। भन्न थाल्नुभयो—'मित्र, अर्को पटक भाउज्यूलाई पनि लिएर आउनू। उहाँलाई मेरो संझना भनिदिनू र वन्दना पनि।'

सारा विश्व श्रीकृष्णलाई वन्दना गर्छ र उहाँ एक गरीब ब्राह्मणकी पत्नीलाई वन्दना गर्नुहुन्छ। 'जस्तो वस्तु माताले पहिले मलाई दिनुहुन्थ्यो, त्यस्तै वस्तु भाउज्यूले मलाई पठाइदिनुभएको छ।' सुदामालाई अङ्कमाल गरेर विदा दिनुभयो। दुवैका आँखाबाट आँसु झरे।

सुदामा, सुदामापुरी पुगेर आफ्नो बिग्रे भत्केको छाप्रो खोज्न थाले। त्यहाँ छाप्रोको नामोनिशान थिएन, ठूलो प्रासाद खड़ा भएको थियो। सुदामा विचार गर्न थाले 'मेरो छाप्रो कसले उठाएर लगिदियो।'

उता सुदामाको आगमनको समाचार सुशीलालाई पुग्यो। उनी दगुर्दै बाहिर आइन् र पतिलाई स्वागत गर्दै भन्न लागिन्, 'तपाईंका मित्रका कृपाले यो भएको हो।'

सुदामाको मन कृतज्ञताले भरिएर आयो। उनी प्रार्थना गर्न थाले 'मलाई धनको चाहना छैन, म यही चाहन्छु जन्म-जन्मान्तर मैले श्रीकृष्णको भक्ति गर्ने अवसर पाउँदै रहूँ, उहाँका चरणमा मलाई स्थान मिलोस्।'

सुदामाको चरित्रमा पनि एक सार छ। परमात्मा जीवमात्रको निःस्वार्थ मित्र हुनुहुन्छ। जगत्मा परमात्मालाई छोड़ेर यस्तो कोही छैन जसले आफ्नो सर्वस्व कसैलाई देओस्। यदि सेवा र स्तुति गर्नु छ भने भगवान्को गर। जीव जब ईश्वरसँग प्रेम गर्छ तब ईश्वर जीवलाई पनि ईश्वर बनाइदिनुहुन्छ। जीवको सच्चा मित्र, परमपिता ईश्वर मात्र हुनुहुन्छ।

सुदामाले ईश्वरसँग निरपेक्ष प्रेम गरेका हुनाले उहाँले सुदामालाई आफ्नो तुल्याउनुभयो र आफूजस्तै वैभवशाली पनि बनाइदिनुभयो। सुदामापुरीलाई पनि द्वारिका जस्तो समृद्ध तुल्याइदिनुभयो।

भगवान् तर उहाँका चरणकमल स्पर्श गर्नेलाई आफ्नो स्वरूप दिनुहुन्छ। तुच्छ धनको दानको आश्चर्यै के भयो र?

स्मरतः पादकमलमात्मानमपि यच्छतिकिंन्वर्थकामान्।

( भा० १०-८०-८१ )

शारीरिक मिलन तुच्छ छ, मनको मिलन दिव्य छ, यदि धनी व्यक्तिले दरिद्रहरूलाई हृदयबाट सम्मान दिए भने आज पनि सबै नगर द्वारिकाजस्तो समृद्ध हुन सक्छन्।

सूर्यग्रहणको श्रद्धामा वसुदेव-देवकी तथा अन्य सबै यादव कुरुक्षेत्र गए।

सकाम भावबाट गरेको कामले स्वर्ग पुऱ्याउँछ तर मुक्ति भने दिँदैन। निष्काम कर्मले पापलाई भगाइदिन्छ। मनुष्यको शरीर त्यो कुरुक्षेत्र हो जहाँ निवृत्ति र प्रवृत्तिको युद्ध भइरहन्छ। यस शरीर रथलाई जसले श्रीकृष्णको हातमा सुम्पन्छ, उसैको जीत हुन्छ।

कृष्ण कथाले हामीलाई आफ्ना दोषहरूको राम्ररी सूचना दिन्छ। कृष्ण कथाका श्रवणले हामीलाई भजन गर्ने प्रेरणा पाइन्छ र त्यसो भएपछि हाम्रा इन्द्रियहरू शुद्ध हुन्छन्। गंगा स्नान शरीरलाई शुद्ध गर्छ, त्यसकारण गङ्गास्नानको अपेक्षा कृष्णकथा स्नान ज्यादै श्रेष्ठ छ।

वासना पुनर्जन्मको कारण हो, त्यसकारण मृत्युअगावै वासनाको त्याग गर। शत्रुता र सुखको चाहनाले वासनालाई जन्म दिन्छ। तिनको त्याग हुनैपर्छ।

कुरुक्षेत्रमा आएका माता-पितालाई श्रीकृष्णले एक दिन सोध्नुभयो—'तपाईंको मनमा केही इच्छा छ ? यदि छ भने म पूर्ण गरिदिन्छु।'

वसुदेव—'त्यसो तर मेरो अरू कुनै इच्छा र वासना छैन। मेरो एक चाहना यही छ म अन्तकालमा तिम्रो स्मरण गर्दै देहत्याग गर्न सकूँ।'

शरीरत्यागका समयमा ठूलो वेदना हुन्छ। त्यसकारण मनलाई यस्तो शिक्षा देऊ जो मरणकालमा, त्यस वेदनाका बीचमा पनि भगवान्कै स्मरण हुन आओस्। मृत्युका समयमा भगवान्लाई संझना गर्ने व्यक्तिलाई धन्य छ। त्यस्तै व्यक्तिको जीवन सार्थक छ। मृत्युको चिन्ता गर्नाले पापबाट बच्न सकिन्छ।

एक पटक एकनाथ महाराजसँग कसैले सोधेछ—'तपाईं सँधै ईश्वरमा मग्न र आनन्दित भएको हुनुहुन्छ। मेरो मन तर ईश्वरमा पटक्कै लाग्दैन, यस्तो किन भएको ?'

एकनाथ महाराजले मनमनै भन्नुभयो 'मन संसारबाट हट्यो भने प्रभुमा लाग्छ।' प्रकटमा भन्नुभयो—'आज म केही भन्न सक्दिनँ, आजको सातौं दिन तिम्रो मृत्यु हुनेछ। त्यसै दिन तिमी मकहाँ आऊ, म तिमीलाई सबै कुरा भन्ने छु।'

मृत्युलाई नजिक आएको देखेर त्यो मानिस आत्तियो। आफ्ना छोराहरूलाई सारा धन-सम्पत्ति तथा कारोबार जिम्मा लगायो र प्रभुभजनमा लाग्यो। मरणको तयारी गर्न थाल्यो।

सातौं दिन एकनाथ महाराजकहाँ आयो तब उहाँले सोध्नुभयो—'के कस्तो भयो ? यी दिनहरूमा के मोज गऱ्यौ ?'

त्यस गृहस्थले भन्नथाल्यो—'शिरमा मृत्युलाई घुमेको देखेर भोग, विलास सबै बिर्सिएँ र ईश्वरको भजन गर्दै रहें।'

एकनाथजी—'अब मेरो ईश्वरमग्नताको रहस्य तिमीले बुझ्यौ ? म सधैं मृत्युलाई दृष्टि-समक्ष राख्छु। त्यसकारण मन ईश्वर भजनमा लागिरहन्छ।'

भगवान्ले देवकीको इच्छा जान्ने मन गर्नुभयो। देवकीले भनिन् 'मलाईभन्दा सङ्कोच लागिरहेछ। तर मेरो इच्छा छ कंसद्वारा मृत्युप्राप्त सबै आफ्ना सन्तानहरूलाई म हेर्न चाहन्छु।'

भगवान्ले यशोदासँग पनि उनको इच्छा सोध्नुभयो। यशोदाले भनेकी थिइन्—'मेरो यही इच्छा छ निरन्तर तिम्रो दर्शन गर्दै रहूँ र एकक्षण पनि तिमी मेरा दृष्टिबाट टाढ़ा हुन नपाए।'

कहाँ यशोदाको इच्छा र कहाँ देवकी ?

कृष्णले सुतल-पातालबाट आफ्ना सबै बन्धुहरूलाई ल्याइदिनुभयो। देवकीले उनीहरूलाई देखिन् र भनिन्—'भयो, अब मेरो इच्छा छ मेरो मृत्यु सुध्रियोस्।'

ज्ञानी महात्मालाई मात्र होइन, ईश्वरका मातापितासम्मलाई शङ्का रहन्छ कहीं उनको मृत्यु नबिग्रियोस्।

त्यही व्यक्तिको मृत्यु उज्ज्वल हुन्छ जसले आफ्नो प्रतिक्षण सुधार्दछ।

प्रभुले वसुदेव-देवकीलाई दिव्य तत्त्वज्ञान संझाउनुभयो।

दशम स्कन्धको अन्तमा सुभद्राहरणको वर्णन छ।

भद्र अर्थात् कल्याण गर्ने भएकी ब्रह्मविद्या सुभद्रा हो। अद्वैतदर्शी ब्रह्मविद्या भनेकै सुभद्रा हो। जसका घरमा सुभद्रा हुन्छिन्, उसको जीवन कल्याणमय सुखी हुन्छ।

अर्जुनको जस्तै संन्यास लिएर तप गर्नेलाई सुभद्राको प्राप्ति हुन्छ। अर्जुनले त्रिदण्डी संन्यास लिएर चार महिनासम्म कठिन तपस्या गरेर प्रतिदिन अठार घण्टा ॐकारको जप गरे, अनि प्रभुले उनलाई सुभद्रा ( ब्रह्मविद्या ) दिनुभयो।

चञ्चल आँखा भएकाको मन पनि चञ्चलै हुन्छ। स्वादु भोजन गर्नेले राम्ररी भजन गर्न सक्तैन। ब्रह्मविद्याको प्राप्तिका निमित्त त्रिदण्डी संन्यासी हुनुपर्छ।

प्रभुलाई सर्वस्वको त्याग गर्नु संन्यास हो। सांसारिक सुखहरूको उपभोग गर्दै भक्ति गर्नेलाई भगवान् छिट्टै कृपा गर्नुहुन्न। संसारसुखको त्यागीसँग भगवान् छिट्टै प्रसन्न हुनुहुन्छ।

परीक्षितले सोध्नुभयो—'शब्दरूप वेद, निराकार वेदको प्रतिपादन कसरी गर्दछन् ?'

शुकदेवजीले वेदस्तुतिको कथा सुनाउनुभो।

सृष्टिको आरम्भमा शेषशायी नारायणको वेदहरूले स्तुति गरेका छन्। परमात्मालाई वेदहरूले मङ्गल गान गरेर जगाए—नाथ ! हजूरको जय होस्। वेद प्रभुको जय-जयकार गर्दछन्, तब लाग्दछ जीवको हार भएछ, जीवलाई मायाले समातिराखेको छ, त्यसकारण मेरो पनि जय होस्। म पनि मायाको बन्धनबाट मुक्त हुन पाऊँ। परमात्माको जयकार गरेर वेद माया बन्धनबाट मुक्तिको प्रार्थना गर्छन्।

अनादिकालदेखि जीव र मायाको संग्राम चलिरहेछ। मायाले उसलाई जगत्का विषयहरूमा फँसाइरहन्छ, त्यसकारण वेद परमात्माको स्तुति गर्दछन् मायाको बन्धनलाई काटिदिनुहोस्।

मायाले जीवलाई स्त्री-धन आदिमा फँसाएर परमात्मातर्फ जानै दिन्न। 'नाथ, हामी तपाईंको शरणमा आएका छौं। यस मायाको बन्धनलाई काटिदिनुहोस्।'

प्रभुले विचार गर्नका निमित्त बुद्धि र मन दिनु भएको छ। पवित्र विचार गर्नाले मन शुद्ध हुन्छ।

वेद सगुण र निर्गुण ब्रह्मको वर्णन गर्दछ। ईश्वर साकार र निराकार दुवै रूपहरूबाट लीला गर्नुहुन्छ। ईश्वरको निराकारको अर्थ यही हो जो उहाँको हाम्रो जस्तो आकार छैन।

निर्गुण र सगुण दुवै ब्रह्म वस्तुतः एउटै हुन्। निर्गुण, भक्तिवश भएर सगुण बन्दछन्। भक्ति-प्रेमवश प्रभु सगुण बन्नु हुन्छ।

'नाथ, यो जगत्‌मा जे-जति दखिन्छन् र अनुभूत हुन्छन्, ती वस्तुतः तपाईंकै स्वरूप हुन्। लौकिक नामरूप सत्य होइन।'

माटाको भाँड़ामा पनि माटै हुन्छ। बरफमा पनि पानी हुन्छ। यस्तै प्रकारले प्रभु सबैमा व्याप्त हुनुहुन्छ।

ज्ञानको अपेक्षा ध्यान श्रेष्ठ हो, त्यसकारण ईश्वरको कुनै पनि स्वरूपको बारम्बार चिन्तन, ध्यान, स्मरण र दर्शन गर। त्यसो गरेपछि मनको शक्ति बढ्ने छ। मनलाई परमात्माको कुनै पनि स्वरूपमा विवेकपूर्वक स्थिर गरिदेऊ।

अगाड़ि शिवतत्त्व र विष्णुतत्त्वको रहस्य पनि संझाइएको छ।

वेदस्तुतिका विद्वान्‌हरू आफ्नो अर्थ लगाउँछन्। आरम्भवाद, परिणामवाद आदि अनेकौं मत विद्वान्‌हरूले प्रकट गरेका छन्। आफ्नो दृष्टिका अनुसार उनीहरूले अर्थ लगाएका छन्।

वेद ईश्वरको निषेधात्मक वर्णन गर्दछ। ज्ञानमार्गी 'नेति-नेति' भनेर ईश्वरको वर्णन गर्छन्। भक्तिमार्गी, 'इतिइति' भनेर भगवान्‌को वर्णन गर्छन्। त्यसो तर दुइटैको एउटै लक्ष्य हो।

अर्जुनलाई आफ्नो वीरत्वको अभिमान थियो त्यसकारण प्रभुले नष्ट गरिदिनु भयो।

प्रभुका अनन्त गुणहरूको वर्णन कसले गर्न सक्छ?

प्रभुले एघार वर्षसम्म गोकुलमा लीला गर्नुभयो। फेरि उहाँ मथुरा जानुभो। वहाँबाट द्वारिका गएर उहाँले कतिपटक विवाह गर्नुभयो। उद्धवलाई ज्ञानोपदेश दिएर उहाँ स्वधाम जानु भयो।

भगवान्‌का लीलाहरू अनन्त छन् र गुण पनि अनन्त। उहाँको लील।को चित्रण गर्नाले मन उहाँमा लीन हुन्छ, तद्रूप भइहाल्छ।

शान्ताकारं भुजगशयनं पद्मनाभं सुरेशं।
विश्वाधारं गगनसदृशं मेघवर्णं शुभाङ्गम्॥
लक्ष्मीकान्तं कमलनयनं योगिभिर्ध्यानगम्यम्।
वन्दे विष्णुं भवभयहरं सर्वलोकैकनाथम्॥
हरे राम हरे राम, राम राम हरे हरे।
हरे कृष्ण हरे कृष्ण, कृष्ण कृष्ण हरे हरे॥

# एकादश स्कन्ध

श्रीकृष्णाय नमः।

यस एघारौं ( एकादश ) स्कन्धमा पहिलेका दश स्कन्धहरूको उपसंहार छ। यसमा कपिलगीता, पुरञ्जन आख्यान, भवाटवीवर्णन आदि पनि छन्। एकादश स्कन्ध भगवान्को मुख हो।

नवौं स्कन्धमा ईशानुकथा-लीला थियो र दशौं स्कन्धमा निरोध लीला। श्रीकृष्णका कथा र लीला अनन्त छन्। यस कथाको प्राकट्यको साथै गङ्गास्नानको महिमा कम हुँदै गएको छ। भागीरथीमा स्नान गर्नका निमित्त जानलाई रुपियाँ-पैसाको आवश्यकता पर्छ, वहाँसम्म जानु पनि पर्छ। तर कृष्णकथामा स्नान गर्नका निमित्त न कहीं टाढ़ा जानुपर्छ न रुपियाँहरूको आवश्यकता पर्छ। गङ्गास्नानले केवल शरीरको शुद्धि हुन्छ, यताचाहिँ कृष्णकथाको स्नानबाट मनको र हृदयको शुद्धि हुन्छ। एकादश स्कन्धमा मुक्ति लीला छ किनभने साधकको मन भगवान्सँग गएर मिलेको छ।

जसको मन निरोध हुन्छ, त्यसले छिट्टै मुक्ति पाउँछ। दशौं स्कन्धमा निरोध भएको हुनाले यस स्कन्धमा मुक्ति भयो।

मुक्त तर मनलाई गर्नु छ किनभने आत्मा चाहीं मुक्त छ। विषयहरूको चिन्तन छोड़ेर ईश्वरको चिन्तन शुरू गरिदिए जीव मुक्त भइहाल्यो। जीव अज्ञानको कारणले बन्धनको अनुभव गर्दछ। वस्तुतः उसलाई कसैले बाँधेको छैन। विवेक, तत्त्वज्ञान र वैराग्यले मोहलाई नष्ट गरियो भने मात्र मुक्ति हो।

मनलाई वैर र वासनाले मुक्त राख्यो भने निरोध चाँड़ै हुनेछ। जसको वैराग्य दृढ़ भएको छ उसलाई मात्र मुक्ति मिल्नेछ।

एघारौं स्कन्धको प्रथम अध्याय वैराग्यसँग सम्बद्ध छ। वैराग्यको विना भक्ति हुन सक्दैन। मनलाई सम्झाऊ सुखको, धन-सम्पत्तिको, भोगको चिन्तन विषमय छ। त्यसबाट कहिल्यै तृप्ति र शान्तिको अनुभव हुन पाउँदैन। ईश्वरको चिन्तनविना, पवित्र आचार-विचारविना वैराग्य आउन पाउँदैन। जबसम्म संसारका प्रत्येक विषयका प्रति वैराग्य आउँदैन शुद्ध भक्तिको आरम्भ हुन पाउँदैन।

सत्-असत्को विचार गर्नाले विवेक उत्पन्न हुनेछ र वैराग्य पनि। संसारका सबै जड़ पदार्थ दुःख रूप र असत् छन्। चेतन परमात्मा मात्र आनन्दरूप र सत् छन्। निश्चय गर जगत्का पदार्थ

भ्रम मात्र हुन्, दुःखदायी हुन्, क्षणिक हुन्। विषयहरूको संयोगले सुख दिन्छ तर तिनको वियोग बड़ो दुःखदायी हुन्छ।

भगवान्लाई अब वैराग्य आउन थालेको छ। जीवलाई जब वैराग्य आउँछ तब वस्तुस्थितिको कटुताको भान हुन्छ। जीवनमा जब कुनै धक्काजस्तो लाग्छ अनि वैराग्य आउँछ।

तुलसीदास आफ्नो जवानीमा पत्नीका तर्फ धेरै आसक्त थिए। एक पटक दुलही माइत गएकी थिइन्। तुलसीदासले यो विरह सहन नसकेर ससुरालीतर्फ हिँड़े। रात्रिको वेला थियो, मुसलधारे वर्षा भइरहेको थियो। नदीमा ठूलो बाढ़ी आइरहेको थियो। एउटा मुर्दालाई मूढो संझेर त्यसैमा चढ़ी उनले नदी पार गरे। ससुरालीमा ढोका बन्द भएको हुँदा उनले झ्यालबाट भित्र पस्ने विचार गरे। एउटा सर्प झण्डिरहेको थियो। त्यसलाई डोरी संझिएर उसैको सहाराले माथि चढ़ेर दुलहीको कोठाभित्र पुगे। पत्नीले दुलहाको पराक्रमको कुरा सुनिन् र उनले धिक्कारिन्। जस्तो प्रेम मेरो हाड़ छाला भएको देहसँग गर्नुहुन्छ त्यत्तिकै प्रेम प्रभुका निमित्त गरी यति कष्ट सहेको भए तपाईंको उद्धार हुने थियो।

हाड़मांसकी देहमन, ता पर इतनी प्रीति।
तिसु आधी जो रामप्रति अवसि मिटिहि भवभीति॥

पत्नीको वचन सुन्नासाथ तुलसीलाई एउटा धक्का जस्तो लाग्यो। उनको ज्ञानचक्षु खुल्यो र त्यसै क्षण उनले संसार त्यागिदिए। सारा जीवन रामचन्द्रजीको सेवामा बिताए।

भगवान्लाई लागिरहेको थियो यी सबै सांसारिक प्रवृत्तिहरू अब बाधारूप बन्दै गइरहेछन्।

एक पटक पिण्डारक तीर्थमा विश्राम गरिरहेका साधुहरूको हँसी उड़ाउने युक्ति यादवकुमारहरूले गरे। उनले साम्बलाई स्वास्नी मानिसको लुगा लाइदिएर ऋषिहरूका नजिक लगेर उनलाई सोधे—'महाराज, यी गर्भिणी नारीको पुत्र हुन्छ कि पुत्री ?'

साँचो कुरा के हो भनेर ऋषिले थाहा पाइसके। भगवान्को प्रेरणाले उनले भने—'साम्बको गर्भबाट मुसल उत्पन्न हुने छ, जसले समग्र यदुवंशको नाश गर्ने छ।'

अब यादवकुमार डराए। उनीहरूले त्यस मुसललाई बालुवा जस्तो टुक्रा बनाएर समुद्रको किनारामा छाड़िदिए जो एक टुक्रा बाँकी रहेको थियो त्यसलाई पनि फ्याँकिदिए। ती रजकणहरूबाट उत्पन्न भएका एरिकघाँस ( पटेर )-द्वारा यादवहरू आपस्तमा लड़ी मरे। त्यस टुक्राबाट जरा नामक व्याधाले वाणको अग्र भागको काण बनायो जो श्रीकृष्णलाई प्राणघातक सिद्ध भयो।

भगवान्ले सोच्नुभएको थियो यादवकुमारले भविष्यमा जनतालाई सताउने छन्। त्यसकारण त्यसप्रकार उनको नाश गरियो। त्यो मुसल कालसरह थियो।

ऋषिहरू, पवित्र सन्तहरूको अपमान गर्नेको अहित मात्रै हुन्छ।

बुद्धि विकृत हुनासाथ काल सम्मुख आइपुग्छ।

जीवलाई उत्पत्ति र स्थितिमा आनन्द आउँछ लयमा होइन। भगवानलाई लयमा पनि आनन्द मिल्छ। किनभने उहाँ स्वयं आनन्दरूप हुनुहुन्छ।

एक पटक नारदजी वसुदेवकहाँ जानु भयो तब उहाँले विधिवत् पूजा गरेर भन्नुभयो—'कृपया मलाई त्यो उपदेश दिनुहोस् जसबाट म यस जन्म-मृत्युरूप भयानक संसारलाई अनायासै पार गर्नसकूँ।'

नारदजीले वसुदेवलाई नवयोगेश्वर र निमि राजाको संवाद सुनाउनु भयो—

एक पटक विदेहराज निमिराजाको राजसभामा नव योगेश्वर आउनुभयो। तब राजाले उनलाई सोधे—परम कल्याणको स्वरूप कसरी हुन्छ ? त्यसको साधन के हो ? के तपाईं मलाई भागवत धर्मको उपदेश दिनु हुन्न ?

आधा क्षणको सत्सङ्ग पनि मनुष्यका निमित्त परमनिधि बन्न सक्छ।

तुलयाम लवेनापि न स्वर्गं ना पुनर्भवम्।
भगवत्संगिसंगस्य मर्त्यानां किमुताशिषः॥

भगवान्मा 'आसक्त सन्तहरूको क्षणभरको सङ्ग पनि स्वर्ग र मोक्षको तुलनामा अधिक महत्वपूर्ण छ। तब अन्य पदार्थहरूको चर्चै के भयो ?'

योगेश्वरले भन्न थाल्नुभयो—राजन् ! ध्यान दिएर सुन्नुहोस्—

श्रीकृष्ण अंशी हुनुहुन्छ र जीव अंश। कसैले सोध्लान् यी दुइ कहिले भए, कसरी विभक्त भए। अज्ञानको आरम्भ कहिले भयो, यो कसरी भन्न सकिन्छ ? अज्ञानलाई तर नाश गर्नु छ।

जीव अंश, ईश्वर अंशीमा मिलेपछि सुख र शान्ति पाउन सक्छ। त्यो विरह महादुःखको कारण छ। जबदेखि जीव परमात्मादेखि विभक्त भएको छ, दुःखी भइरहेछ। निर्भय हुनुछ भने परमात्माको शरणमा जाऊ।

जीव ईश्वरबाट अलिकति पनि टाढ़ा भयो भने दुःखी मात्र हुनेछ। जीवमात्र रोगी छ, किनभने ऊ वियोगी छ। निश्चय गर तिमीलाई ईश्वरसँग भेट गर्नुछ। यो शरीर मलीन छ। यस शरीरद्वारा ब्रह्मसम्बन्ध हुन पाउने होइन। शरीर दुर्गन्धयुक्त छ, त्यसकारण देव यसबाट टाढ़ा भाग्छन्। मनलाई ईश्वरसँग सम्बन्ध जोड़।

काल सबैका टाउकामाथि घुमिरहेछ। त्यसबाट बाँच्नु छ भने श्रीकृष्णाका शरणमा जाऊ। सबै काम प्रभुको आज्ञा मानेर, प्रभुलाई प्रसन्न गर्नका निमित्त र प्रभुपट्टि फर्केर गर। सबै व्यवहार प्रभुसँग आन्तरिक सम्बन्ध राखेरै गर। त्यसो गर्नाले सबै क्रियाहरू भक्ति बन्न जानेछन्।

कर्कश वाणीको प्रयोग कहिल्यै नगर।

सबैमा प्रभुको अंश छ, यस्तो मानेर व्यवहार गर्नाले त्यो व्यवहार भक्तिमय बन्नेछ, जड़-चेतन एक हुन्, सबै जड़-चेतन ईश्वरमय छन्, यस्तो मान्नाले पापहरूबाट बाँचिनेछ र मनलाई शान्ति पनि हुनेछ।

सबै सन्तहरू जीवननिर्वाहका निमित्त कुनै न कुनै कामकाज गर्दा छन्। सेना नाऊले विचार गऱ्यो ऊ मानिसहरूको शिरबाट मैलो ( कपाल ) झिकिरहेको छ तर आफ्नो मनको मैलो हटाउँदैन। त्यो सोचमा डुब्यो। बिस्तार-बिस्तार उसको जीवन नौकै पल्टियो र ऊ सन्त बन्यो।

कारोबार गर्दा प्रभुलाई सदा संझिराख। सांसारिक भक्ति र व्यवहारलाई एउटै बनाइदेऊ।

ज्ञान प्राप्त गर्नका निमित्त सत्सङ्ग गर्नु आवश्यक छ। त्यसकारण प्रतिदिन सत्सङ्ग गर्नुपर्छ। सत्सङ्गबाट मनको अशुद्धि हट्दछ। जीव जन्मका समयमा शुद्ध हुन्छ, तर सङ्गको रङ्ग उसमा चढ़िहाल्छ। त्यसकारण श्रेष्ठ सन्तसँग हमेशा बस।

सन्त त्यो हो, जो जताततै सौन्दर्यलाई देख्छ तर त्यसमा मनलाई रम्न दिँदैन। सन्त सदा प्रभुको मात्र स्मरण, चिन्तन गर्दछ। त्रैलोक्यको राज्य पाए पनि जसले भगवान्लाई बिर्सदैन, त्यही व्यक्ति सच्चा सन्त हो। सन्त त्यो हो जसले प्रेम-डोरीद्वारा हृदयका साथ परमात्मालाई बाँधिराख्छ। यस्तै सन्तहरूको सङ्गत गर।

जबसम्म सांसारिक विषय प्रिय लाग्दछ, तबसम्म तिमी वैष्णव बन्न सक्दैनौ र मुक्तिका निमित्त पात्र पनि हुँदैनौ।

सुन्दर विषयहरूको उपभोग गर्ने शक्ति र सुविधा भए पनि मन उनमा जान नदिनेलाई सच्चा वैष्णव भन्छन्।

दुइ बाटाहरू छन्—त्याग र समर्पण। जे त्याग गर्न सक्छौ त्यसलाई समर्पण गर। सबैसँग प्रेम गर। सबै कुरा कृष्णार्पण गर्ने भाव राख अथवा न म कसैको छु र न कोही मेरा छन् यस्तो संझेर सर्वस्वको त्याग गरी प्रभुसँग प्रेम गर।

शरीर, वाणी, मन, इन्द्रियहरू, बुद्धि तथा स्वभावद्वारा गरिने सबै कर्महरूलाई नारायणमा समर्पित गर्नु सीधा सरल भागवत धर्म हो।

कायेन वाचा मनसेन्द्रियैर्वा वृद्ध्याऽत्मना वा नुसृतस्वभावात्।
करोति यद् यत् सकलं परस्मै नारायाणायेति समर्पयेत्तत्॥

( भा० ११-२-३६ )

यस प्रकार प्रतिक्षण प्रत्येक वृत्तिद्वारा भगवान्का चरण कमलको भजन गर्नेवाला व्यक्तिले प्रभुको प्रीति, प्रेममयी भक्ति तथा संसारका प्रति वैराग्य र भागवत-स्वरूपको अनुभव यी सबै एकसाथ प्राप्त गर्दछ।

**सर्वभूतेषु यः पश्येद् भगवद्भावमात्मनः।**
**भूतानि भगवत्यात्मन्येष भागवतोत्तम॥**

आत्मस्वरूप भगवान् समस्त प्राणीहरूमा आत्मरूप नियन्तारूपबाट स्थित हुनुहुन्छ। जुन व्यक्तिले कहीं पनि धेरै वा थोरै नदेखेर सर्वत्र भागवत-सत्तालाई मात्र देख्छ, समस्त प्राणी र पदार्थ आत्मस्वरूप भगवान्को कारण स्थिर छन्। भागवत् स्वरूप छन् भन्ने अनुभव गर्दछ, त्यसलाई भगवान्को परम प्रेमी भक्त मान।

जसले मनबाट एकमात्र भगवान्मा निवास गर्दछ त्यो उत्तम भागवत भक्त हो।

तेस्रो योगेश्वर अन्तरिक्षले मायाको लक्षण बताए। योगेश्वर प्रबुद्धले मायालाई पार गर्ने उपाय बताए।

जसले मायालाई पार गर्न चाहन्छ, त्यसले स्वतन्त्र रहनाको साटो कुनै सच्चा सन्तलाई गुरु बनाउनुपर्छ र त्यसले सद्गुरुको आज्ञामा बस्नुपर्छ। विलासी र पाखण्डी गुरुले शिष्यको कल्याण गर्नुको बदला अहित मात्र गर्ने छ। त्यसकारण पहिले ब्रह्मनिष्ठ गुरुलाई खोज्नुपर्‍यो।

जसलाई ब्रह्मशब्दका प्रतिमात्र लगाव छ त्यो गुरुपदको अपात्र हुन्छ। सन्त यस्तो ब्रह्मनिष्ठ हुनुपर्छ जसको संझनाले मात्र पनि शिष्यलाई पापकर्मतर्फ बढ्न रोक्छ।

जवानी अन्धो र उच्छृङ्खल हुन्छ। त्यसकारण यस अवस्थामा सद्गुरु, सन्तहरूका आज्ञामा बस्नुपर्छ।

जो मायाबाट छुट्न चाहन्छ, उसले ब्रह्मचर्यको पालन गरोस्, आँखाबाट पनि र मनबाट पनि। सधैं एकान्तमा, एक आसनमा तीन घण्टासम्म प्रभुनामको जप गर।

वाणी संयम पनि आवश्यक छ। प्रतिदिन कम्तीमा तीन घण्टासम्म मौन बस। मौनले मनलाई एकाग्र गराएर चित्तको शक्तिलाई बढाउँछ।

वाणी र पानीको दुरुपयोग गर्ने मानिस ईश्वरको अपराधी हो।

मन, वचन, कर्मबाट कसैलाई पनि दुःख नदेऊ। स्वधर्ममा, भागवतधर्ममा निष्ठा राख, तर अन्यधर्महरूका प्रति कुभाव होइन, आदर राख।

सँधैं प्रार्थना गर। जीव र ईश्वरको पहिलो सम्बन्ध वाग्दानबाट हुन्छ। सधैं प्रार्थना गर। 'नाथ, म तपाईंकै हुँ, मेरा अपराधलाई क्षमा गरिदिनुहोस्।'

विवेकपूर्वक विचार गर्नाले मायाको मोह कम हुन्छ। यसो नगरेका खण्डमा मनुष्यले आफ्नो धेरै जसो समय धन, व्यसन र फेशनमा गुमाइरहन्छ।

मायालाई पार गर्न यसो तर निकै साधन छन् तर भक्ति अनायास र सहज प्राप्त साधन हो।

**मामेव ये प्रपद्यन्ते मायामेतां तरन्ति ते।**

जो मेरा शरणमा आउँछ, त्यो मायासागरबाट तरेर जान्छ।

कलियुगमा श्रीकृष्णको नाउँ जप्नाले सद्गति पाइन्छ। सेवा केवल क्रियात्मक होइन भावात्मक पनि हुनुपर्छ।

कलियुगका मानिस विलासी छन्। शरीरको उत्पत्ति कामद्वारा हुन्छ त्यसकारण यस युगमा योग र ज्ञानमार्गबाट ईश्वरलाई प्राप्त गर्नुको साटो हरिकीर्तनबाट पाउन सरल छ।

यसो तर सिद्धान्त र यमनियम जान्ने सबै छन् तर पुण्यशाली व्यक्तिले मात्र त्यसलाई आफ्नो जीवनमा उतार्न सक्छ।

नामजप सरल छ किनभने तिम्रो जिब्रो तिम्रै अधीनमा छ। भगवान्को नाउँ सर्वसुलभ भए पनि अधिकांश जीव नरकगामी हुन्छन् यो बड़ो आश्चर्यको कुरा छ।

नारायणेति मन्त्रोऽस्ति वागस्ति वशवर्तिनी।
तथापि नरके घोरे पतन्तीत्येतदद्भुतम्॥

महाभारतको वन पर्वमा यक्ष-युधिष्ठिर संवाद आउँछ। यक्ष युधिष्ठिरसँग सोध्छन्। यस जगत्को सबभन्दा ठूलो आश्चर्य कुन चाहिँ छ।

युधिष्ठिर उत्तर दिनुहुन्छ—

अनन्यहनि भूतानि गच्छन्ति यममन्दिरम्।
शेषाः स्थिरत्वमिच्छन्ति किमाश्चर्यमतः परम्॥

मनुष्यले प्रतिदिन हजारौं जीवहरूलाई यमसदन जाँदै गरेको देख्दछ र पनि त्यो स्वयं यसरी व्यवहार गर्छ ऊ अमर छ। मनुष्य यहाँ सदाका निमित्त रहन चाहन्छ। यसभन्दा बढ़ेर अरू के आश्चर्य होला?

अरूलाई मर्दै गरेको देखेर पनि स्वयंलाई अमर मानेर भोग-विलासमा डुब्न खोज्नु सबैभन्दा ठूलो आश्चर्य हो।

पाँचौं योगेश्वर पिप्पलायनले नारायणको स्वरूप देखाए।

निमिराजाले भने—'अब केही कर्मयोगका विषयमा पनि भन्नुहोस्। यी कर्म, अकर्म र विकर्ममा मेरो मन अल्झिएजस्तो भइरहेछ।'

छैटौं योगेश्वर आविर्होत्रले भने—'सत्य हो तिम्रो कुरा। धेरै विद्वान्हरू पनि यसमा अल्मलिन्छन्।'

किं कर्म किमकर्मेति कवयोऽप्यत्रमोहिताः।

वेद कर्मको आज्ञा दिन्छन् र स्वर्गादिको लोभ देखाउँछन् तर उनको उद्देश्य कर्म छुटाउने मात्र हो।

कर्ममा अकर्म र अकर्ममा कर्मको दर्शन गरून् अर्थात् अनासक्त भावले कर्म गरून् उही श्रेष्ठ हुन्।

कर्म गर तर अनासक्त भावले—'मा फलेषु कदाचन।' सबै कर्म ईश्वरार्पण गर।

सातौं योगेश्वर द्रुमिले प्रभुका लीलाहरूको वर्णन गरे। उनले सबै अवतारहरूको कथा सुनाए।

आठौं योगेश्वर चमसले भक्तिहीन पुरुषलाई अधोगतिको वर्णन गरे।

नवौं करभारजन योगेश्वरले परमेश्वरको पूजा विधि बताए।

अन्तमा नारदजीले वसुदेवसँग भन्नुभयो—'अब धेरै समय छैन। श्रीकृष्णलाई आफ्नो छोरा नमान। उनी साक्षात् परमात्मा हुन्।'

उता देवगणहरूले पनि प्रभुसङ्गस्वधाम फर्कनका निमित्त प्रार्थना गर्न थाले। प्रभुले पनि पृथ्वीलोकबाट जाने निश्चय गर्नुभयो।

द्वारिकामा अपशगुन हुन थाले। वृद्ध यादवहरूले भगवान्छेऊ आएर भने—'प्रभु, यहाँ बस्नु ठीक छैन, किनभने ऋषिहरूले श्राप दिएका छन्, प्रवास क्षेत्रमा बस्नु ठीक पर्ला। सबै वहाँ जाने तयारी गर्न थाले।'

उद्धवजीले सुने तब उनले बुझे भगवान् यादवहरूको संहार गरेर यस लोकलाई त्याग गर्ने तयारीमा हुनुहुन्छ। उनी प्रभुका नजिक आए र भन्न लागे—'म तपाईंको शरणमा आएको छु। तपाईंको विरहमा म कसरी बाँच्न सकुँला ? जहाँ तपाईं जानुहुन्छ, म पनि त्यहीं जाने छु।'

भगवान्—'ए उद्धव ! जब तिमी मेरा साथ आएकै थिएनौ भने फेरि सँगै जाने प्रश्न कसरी हुन सक्छ ? यो संसार सपनाको खेल हो, माया हो, भ्रम हो, सत्य केवल आत्मा मात्र हो।'

भगवान्ले उद्धवजीलाई त्याग र संन्यासको उपदेश दिनुभयो।

उद्धवजी—त्याग र संन्यासको मार्ग बड़ो कठिन छ। कुनै सजिलो बाटो देखाइदिनु होस्। मलाई कृपा गरेर ज्ञान दिनुहोस्।

भगवान्—'मैले तिमीलाई मनुष्य जन्म दिएर के कम कृपा गरेको छु ? अब तिमीले स्वयं आफूउपर कृपा गर्नु पर्ला, स्वयं आफ्नु गुरु बनेर आफ्नो उद्धार गर।'

**आत्मा हि गुरुरात्मैव।**

आत्मा स्वयं आत्माको गुरु हो।

ईश्वरले कृपा गरेकै छ, अब स्वयं जीवले आफूऊपर कृपा गर्नु छ। जीवनको लक्ष्य निर्धारित गरेर लगनसाथ त्यसलाई प्राप्त गर्ने प्रयत्न गऱ्यौ भने सफलता अवश्य मिल्ने छ। धेरैजसो जीवहरूलाई आफ्नो लक्ष्यको ज्ञानै छैन। जीवनको लक्ष्य हो प्रभुको प्राप्ति।

कृष्णकथाको श्रवणले पाप डढ्दछन् र चित्त शुद्ध हुन्छ। नियमित भजन गऱ्यौ भने ईश्वरले अवश्य कृपा गर्नु हुनेछ।

उद्धव, मैले तिमी उपर कृपा गरेकै छु। अब तिमीले स्वयं आफूउपर कृपा गर।

अजामिल जस्तो वेश्यागामी र पापीमाथि पनि प्रभुले कृपा गर्नुभएको थियो। फेरि तिम्रा उपर कृपा किन गर्नुहुन्न ?

सङ्कल्प गर यसै जन्ममा भगवान्को दर्शन गर्नु छ।

अब भयङ्कर कलिकाल आउने छ। विधिपूर्वक कर्म हुने छैन। मनुष्यको जन्म पाइएला तर सङ्गको दोष लाग्ने छ।

उद्धव ! तिमीनै तिम्रा गुरु हौ। आफ्ना निमित्त भावपूर्वक प्रयत्न गर। जबसम्म भित्रदेखि प्रेरणा हुँदैन, तबसम्म उद्धार पनि हुँदैन। स्वयं आफ्नो गुरु बनेर आफ्नो उद्धारको प्रयत्न गर। मेरा सिवाय जो देखिएको छ त्यो मिथ्या हो।

उद्धव, म तिम्रो धन होइन, मन माग्दछु। सबैमा एउटै ईश्वरको दर्शन गर। आफ्नो मन मलाई देऊ।

उद्धव भगवान्सँग भन्दछन् मलाई तपाईं सिवाय आत्मतत्त्वको ज्ञान कसले देला ?

भगवान्—'मैले कति प्रकारका शरीरहरूको निर्माण गरेको छु। तर मनुष्य शरीर मलाई अति प्रिय छ। यस मनुष्य शरीरमा जीव तीक्ष्ण र एकाग्र बुद्धियुक्त भएर ईश्वरको साक्षात् अनुभव गर्न सक्छ। यस सम्बन्धमा अवधूत दत्तात्रेय र यदुराजाको संवाद सुन्नयोग्य छ।'

उद्धव यदुराजाले श्री दत्तात्रेयसँग यस्तै प्रश्न सोधेका थिए। यदुराजाले देखे त्रिकालदर्शी अवधूत ब्राह्मण निर्भयसँग घुमिरहेछन्। यस्तैमा उनले सोधे—'दत्तात्रेयजी, तपाईंको जस्तो मेरो शरीर पुष्ट छैन, जुन काम र लोभको अग्निमा संसारका अधिकांश मानिस डढ़िरहेछन्, त्यसबाट तपाईं बिलकुलै प्रभावित हुनुहुन्न। तपाईं आफ्नै स्वरूपमा स्थिर हुनुहुन्छ। तपाईं आफ्नो आत्मामा अनिर्वचनीय आनन्दको अनुभव कुन प्रकारले पाउनुहुन्छ।'

दत्तात्रेयजी—राजन्, मैले थाहा पाइसकेको छु सांसारिक जड़वस्तुहरूमा आनन्द छैन। जड़ वस्तुहरूबाट मनलाई हटाएर सबैको द्रष्टा आत्मस्वरूपमा दृष्टिलाई स्थिर गरेर द्रष्टाको दर्शन म गर्दछु, दृश्यमध्येबाट दृश्यलाई हटाएर जो द्रष्टामा स्थिर हुन्छ उसैले आनन्द पाउँछ।

राजन्, आनन्द बाहिरका विषयहरूमा छैन, भित्र छ। मैले आफ्नो भन्नेलाई बिर्सिदिएर दृष्टिलाई अन्तर्मुख गरेको छु। म आफ्नै स्वरूपमा स्थित छु। प्रारब्धले जेपनि मिल्छ त्यसलाई आनन्दसाथ स्वीकार गर्छु। तिमीले आफूलाई आफैंले सुधारिलेऊ।

दीक्षा-गुरु एक हुन्छन् तर शिक्षा-गुरु अनेक हुन सक्छन्। मैले एकको होइन, चौबीस गुरुहरूबाट ज्ञान पाएको छु। मेरा गुरुका नाम यसप्रकार छन्—

पृथिवी वायुराकाशमापोऽग्निश्चन्द्रमा रविः।
कपोतोऽजगरः सिन्धुः पतंगो मधुकृत् गजः॥
मधुहा हरिणो मीनः पिङ्गला कुररोऽर्भकः।
कुमारी शरकृत् सर्प उर्णनाभिः सुपेशकृत्॥

( १ ) पृथिवी मेरी पहिली गुरुमा हुन्। म बिहान उठेर वन्दना गर्छु। हात क्रियात्मक शक्तिको प्रतीक हो। निश्चय गर, परमात्मालाई मन परूँ र त्यस्तै काम गरूँ। आमाको जस्तै रक्षा गर।

पृथ्विले धैरै कुरा सहेर पनि सबैलाई आनन्द दिन्छिन्। मैले पृथिवीबाट सबैका प्रति सद्भाव र सहनशक्ति सिकेको छु।

( २ ) वायुबाट मैले सन्तोष र निःसङ्गता सिकेको छु।

( ३ ) आकाशले मलाई आत्मा आकाशजस्तै अनादि र अविनाशी छ, ईश्वर ऊजस्तै सर्वव्यापी छ भन्ने सिकाएको छ।

( ४ ) जलबाट मैले शीतलता र मधुरता पाएको छु। जलको जस्तै साधकले शुद्ध हुनुपर्छ। मधुर भाषी र शीतल स्वभावयुक्त हुनुपर्छ।

( ५ ) अग्निबाट मैले पवित्रता सिकेको छु। हृदयमा यदि विवेकरूपी अग्नि छ भने पाप आउँदैन। विवेकै अग्नि हो। कुनै पनि व्यक्तिको दुर्व्यवहारलाई मनमा नराख। अरूहरूको पापको बारेमा सोच्नु पनि पाप हो। अरूका पापहरूको कुरा मनबाट झिकिदेऊ। विवेकाग्निले त्यसलाई डढ़ाइदेऊ।

( ६ ) चन्द्रमाले मलाई क्षमता सिकाएको छ। वृद्धि र ह्रास शरीरको हुन्छ, आत्माको हुँदैन। सम्पत्ति भएमा नबढ्नु र विपत्तिमा दुःखी नहुनु।

( ७ ) सूर्यको जस्तो परोपकारी हुनुपर्छ, तर अभिमानी होइन। एउटै सूर्यका प्रतिविम्ब विभिन्न जलपात्रमा कति देखिन्छन्। आत्मा पनि एक हो, तर विविध देहादि उपाधिहरूका कारणले अनेक स्वरूपवाला देखिन्छ। वास्तवमा आत्मा उपाधिरहित छ।

( ८ ) परेवाको प्रसङ्गबाट मैले यो सिकें, कुनै पनि वस्तु या व्यक्तिका प्रति अतिशय आसक्ति हुनु हुँदैन। त्यो पत्नी र पुत्रको आसक्तिको कारणले मऱ्यो, कसैको मृत्युमा पनि विलाप नगर। रुने मानिस पनि एक दिन जानेवाला छ भने अरूका निमित्त किन रुन्छौ, आफ्ना निमित्त मात्रै रोऊ।

( ९ ) अजिङ्गरको भाँति प्रारब्ध कर्मानुसार जे-जति पाइन्छ त्यसैमा सन्तुष्ट होऊ।

( १० ) समुद्र, वर्षा ऋतुमा धैरै जल पाएर पनि बढ्दैन र ग्रीष्मऋतुमा जल नपाएर पनि सुक्दैन। सुखदुःखमा हामीलाई समुद्र जस्तो हुनुपर्छ।

( ११ ) पुतली पनि गुरुमा हो। त्यो आगोसँग मोहित भएर त्यसको नजिक जान्छे र डढ़ेर मर्छे। मनुष्य पनि मायामा मोहित भएर त्यसमा फँसेर आफ्नो सर्वनाश गराउँछ।

पत्नीको जस्तो सौन्दर्यका पछि पागल भएमा आफ्नो अहित मात्र हुन्छ। जगत्को विषय बाहिर सुन्दर छ, भित्रबाट छैन, सुन्दरता कल्पनामात्र हो।

एकमात्र श्रीकृष्ण सुन्दर हुनुहुन्छ। उहाँसँग प्रेम गर।

( १२ ) भ्रमरको जस्तै सार ग्रहण गर, तर आसक्त नहोऊ। भ्रमरले कमलमा आसक्त भएर आफ्नो प्राण गुमाउँछ। उसले काठलाई प्वाल पार्न सक्छ, तर कमलको कमलो पत्रलाई भने ऊ सक्दैन किनभने उसलाई कमलका प्रति आसक्ति छ।

यो संसार पनि कमल जस्तै छ जसले आफ्नो विषय-गन्धमा जीव भ्रमरलाई फँसाइदिन्छ। भ्रमर कमलफूलको पत्रहरू खोलिने छ भनी सोच्दछ तर हात्तीले आएर उसको सारा सपना बर्बाद गरिदिन्छ। मनुष्य पनि सांसारिक विषयहरूमा फँसेर आफूलाई लुटाइदिन्छ। त्यसकारण विषयसुखमा नफँस।

हात्तीरूपी कालले कुल्चिएर नष्ट हुनुभन्दा अघिबाटै सर्वस्वको मोह छोड़। प्रभुसँग मनलाई जोड्नेवाला जीवले काललाई हराउन सक्छ।

जस्ता प्रकार भ्रमरमा काठलाई प्वाल पार्ने शक्ति छ सोही प्रकार मनुष्य पनि बड़ो शक्तिशाली छ। मनुष्यले चाह्यो भने नारायण बन्न सक्छ, तर उसले पहिले आसक्तिको त्याग गर्नुपर्छ।

मधुकृतका दुइ अर्थ छन्—भ्रमर र मौरी। भ्रमरबाट जो सिकें मैले माथि भनिहालें। कुनै पनि वस्तुको अतिशय संग्रह नगर्नू भन्ने कुरा मैले मौरीबाट सिकें, मौरी मह संग्रह गर्छ, तर मानिस उसलाई मारेर मह खोस्छ।

( १३ ) हात्ती पनि मेरो गुरु हो। स्पर्श सुखको लोभले हात्तीले प्राण गुमाउँछ। मानिसले एउटा ठूलो खाड़ल खनेर मास्तिरबाट घाँसपात राखी त्यसमाथि नक्कली हात्ती राखिदिन्छन्। हात्ती सक्कली हस्तिनी संझेर इच्छाले त्यहाँ जान्छ र तुरुन्त खाड़लमा जाकिन्छ।

पुरुष साधकलाई चाहिन्छ उसले नारीको सङ्ग नगरोस् र स्त्री साधिकाले पुरुषको सँग नगरोस्, मूर्तिसम्म पनि स्पर्श नगरोस्।

पदापि युवतीं भिक्षुर्नस्पृशेद्दारवीमपि।

( १४ ) मौरीद्वारा एकत्रित भएको मह शिकारीले खोसेर लैजान्छ। योगीले पनि विना मेहनत भोग पाउन सक्छ। धन-संग्रह गर्नु सट्टा दान गर।

( १५ ) जस्ता प्रकार स्पर्श सुखको लोभले हात्तीको नाश हुन्छ सोही प्रकार संगीतश्रवणको इच्छाले हरिणको नाश हुन्छ। त्यसकारण योगीले गीत, नृत्य, संगीत आदि विषयहरूको त्याग गर्नुपर्छ।

( १६ ) रस सुखको, जिह्वा स्वादको लोभले माछो मर्दछ। बल्छीमा झुण्ड्याइएको मासुलाई माछो खान जान्छ र मर्दछ। मानिसलाई पनि यस जिब्रोले बड़ो दुःख दिन्छ। सबै इन्द्रियहरूलाई जितेर पनि यदि जिब्रोलाई जितिएन भने नाश मात्र होला। जसले रसनालाई जित्दछ, त्यसले सर्वस्वलाई जित्दछ।

जितं सर्वः जिते रसे।

दत्तात्रेयजीले यस प्रकार शब्द, स्पर्श, रस, रूप र गन्ध यी पाँच विषयहरूको चर्चा गर्नुभो। एकै विषयको सेवन गरेर पनि हात्ती भ्रमर आदिको नाश हुन्छ तब सबै विषयहरूको सेवन गर्ने मनुष्यको कस्तो दुर्गति हुँदो होला।

मृत्युका पश्चात् सुनाइने 'गरुड़पुराण' मानिसले मृत्युको पहिल्यै सुन्नुपर्छ।

कुरंग, मातंग, पतंग, भृङ्ग, मीना हतां पंचभिरेव पञ्च।
एक प्रमादी स कथं न हन्यतेयः सेवते पञ्चभिरेव पञ्च॥

पुतली, हात्ती, हरिण, भ्रमर र माछा एक विषयको आसक्ति मात्रले गर्छन् भने पाँच विषयहरूको उपभोग गर्ने प्रमादी मानिस किन नगरोस् ?

( १७ ) राजन्, मैले एउटी वेश्यालाई पनि गुरु मानेको छु।

पिङ्गला नाउँ गरेकी एक वेश्या धनवान् ग्राहकको प्रतीक्षामा सारा रात ब्यूँझिरहन्थी। एक पटक उसले सोची 'कामी पुरुषका निमित्त ब्यूँझिरहनाको बदलामा प्रभुका निमित्त जागेर उनलाई किन नपाउनु।' यति भनेर उसले विषयहरूको त्याग गरिदिई। उसले कामी पुरुषको प्रतीक्षामा ब्यूँझन छोड़िदिई। अब ऊ प्रभुलाई प्रसन्न गर्न लागी।

काल सर्पको ग्रास जीवात्माको रक्षा प्रभुका सिवाय अरू कसले गर्न सक्छ ?

ग्रस्तं कालाहिनाऽऽत्मानं कोऽन्यस्त्रातुमधीश्वरः।

यस जगत्मा आशा परम दुःख हो र निराशा परम सुख। त्यसकारण आशा नगरोस्।

आशा हि परमं दुःखं नैराश्यं परमं सुखम्।

आशाको जंजीरले मानिसलाई कतिसम्म अँठ्याएर राख्छ त्यसको वर्णन स्वामी शङ्कराचार्यका शब्दहरूमा सुनौं—

अंगं गलितं पलितं मुंडं दशन विहीनं जातं तुण्डम्।
वृद्धो याति गृहित्वा दण्डं तदपि न मुंचत्याशापिंडम्॥

शरीर गलेर गइरहेछ, कपाल सेतो भयो, दाँत झरिसक्यो, कमजोरीले गर्दा लट्ठीको सहाराले हिँड्नुपर्छ र पनि बूढ़ो आशाको पिण्डले छोड्दो रहेनछ।

यस्तो बूढ़ाको जस्तो आचरण गर्नाको साटो भगवान्‌को भजन गर।

भज गोविंदं भज गोविंदं, गोविंदं भज मूढ़मते।

कामको भोगैषणा सबैभन्दा ठूलो दुःख हो।

( १८ ) कुरी पक्षीको भाँति संग्रह गर्नुभन्दा त्याग गर्दै रहू।

( १९ ) बालकबाट सुधोपना, निर्दोषिता ग्रहण गर।

( २० ) एक गरीब कन्याका कन्यार्थी भएर केही पाहुना आए। घरमा चामल थिएन, तब उसले मुसल लिएर धान कुट्न थाली, चुरा बजेकाले उसले सबै चुरा झिकिदिई, किनभने यदि चुरा रहिरहन दिएको भए मुसलले धान कुट्दा चुरा बज्ने थिए र पाहुनाले थाहा पाउने थिए यस घरमा चामलसम्म रहेनछन्।

यस प्रकार बस्तीमा बस्नाले कलह-क्लेशको सम्भावना हुन्छ। त्यसकारण साधुले एकान्तवास गर्नुपर्छ।

( २१ ) बाण बनाउने पनि मेरो गुरु हो। त्यो आफ्नो काममा यस किसिमबाट मस्त रहन्थ्यो जो बाटामा धूमधामसँग जाने राजाको सवारीका तर्फ पनि उसको ध्यान जाँदैनथ्यो।

लौकिक कामका तन्मयताको विना सिद्धि प्राप्त हुँदैन। पारलौकिक काममा, ईश्वरको आराधनामा तन्मयताका विना सिद्धि कसरी पाइएला? ध्याता, ध्यान र ध्येय जब एकरूप हुन जान्छ तब जीव कृतार्थ हुन सक्छ।

( २२ ) सर्पको जस्तै मुनिलाई पनि एक्लै विचरण गर्नुपर्छ।

( २३ ) माकुराले आफ्नो मुखबाट च्याल चुहाउँछ, उससँग खेल्छ पनि र त्यसलाई निली पनि हाल्छ। ईश्वर पनि आफ्नो मायाद्वारा सृष्टि स्थिति गर्छ र अन्तमा संहार पनि।

( २४ ) कीराहरू पनि मेरा गुरु हुन्। भँवराले कीरालाई समातेर आफ्नो प्वालमा थुनिदिन्छ। कीरा भँवराको डरले उसैको चिन्तन गरिरहन्छ र अन्तमा स्वयं भँवरा बन्दछ।

यस्तै किसिमबाट मानिस पनि ईश्वरको चिन्तन गर्दा-गर्दा ईश्वर बन्न सक्छ। विषयहरूको चिन्तन गर्नाले उसको मन विषयी हुन जान्छ र प्रभुको चिन्तन गरे प्रभुमय हुन्छ।

यदुराजाले गुरु दत्तात्रेयलाई साष्टाङ्ग दण्डवत् प्रणाम गरेपछि श्रीकृष्णाले उद्धवजीलाई बन्धन र मोक्षको स्वरूप संझाउनुभयो।

बन्धन र मोक्ष शरीरको होइन, मनको धर्म हो।

हे उद्धव, यो जीव मेरै अंश हो, तैपनि अविद्याको कारण बन्धनहरूमा फँस्दछ। नामले मात्र त्यसलाई मुक्त गर्न सक्छ। ईश्वर बन्धन र मोक्षबाट टाढ़ा हुनुहुन्छ।

जीव कर्महरूले बाँधिएको छ, ईश्वर नित्यमुक्त छ। यस संसारमा आत्मज्ञानवाला मुक्त छ र अन्य सबै बाँधिएका छन्।

जुन व्यक्तिको प्राण, इन्द्रियहरू, मन, वृत्तिहरू तथा बुद्धि सङ्कल्परहित छ भने त्यो देहधारी हुँदाहुँदै पनि देहगुणहरूबाट मुक्त छ।

साधुहरू र भक्तिका लक्षणहरूको वर्णन पनि गरे।

उहाँले सत्सङ्गको महिमाको वर्णन गर्दै भन्नुभयो—वृत्तासुर, प्रह्लाद, बलिराजा, विभीषण, सुग्रीव, हनुमान, कुब्जा, व्रजका गोपीहरू आदिले सत्सङ्गद्वारा मलाई प्राप्त गर्न सकेका थिए। तिनीहरू वेदबाट पनि अनभिज्ञ थिए र उनीहरूले तप पनि गरेका थिएनन् तैपनि सत्सङ्ग-प्रेरित भक्तिका कारण मलाई पाउन सके।

सत्सङ्गबाट पशु-पक्षीसम्मको जीवन सुध्रिन्छ। कामीसित बसेर ध्यानादि हुन पाउँदैन।

उद्धव ! मानिसहरूका सङ्गमा बसेर मनुष्य बन्न पाउनु सजिलो छ। तर व्रतनिष्ठ हुन पाउन बड़ो कठिन छ। त्यसकारण सदा सत्सङ्गमा बसिरहने प्रयत्न गर्नु।

फेरि भगवान्ले संसारवृक्षको वर्णन गर्नुभयो। संसारवृक्षका बीज हुन् पाप र पुण्य, वासनाहरू मूल हुन्, सत्त्व, रज, तमोगुण ( शाखा ) हुन्, इन्द्रिय मन हाँगा हुन्, विषय रस हो, सुख र दुःख फल हुन्।

विषयहरूमा फँसिरहने भोगी दुःखी हुन्छ। विवेकी परमहंसलाई योगी भन्दछन्, जो सुख भोग्दछन्।

उद्धवजीले सोधे—'मनुष्य जान्दछ विषय दुःखदायी छ र पनि त्यसलाई भोग्ने इच्छा त्यसले किन गर्छ ? विषय मनतर्फ जान्छ वा मन विषयतर्फ जान्छ ?'

भगवान् भन्नुहुन्छ—'यो रजोगुणी मनले मनलाई विषयहरूमा फँसाउँछ। पहिले मन विषयहरूतर्फ जान्छ र फेरि ती विषयहरूको आकार धारण गरेर विषयहरूलाई आफूमा बसाइलिन्छ। मन विषयाकार हुन्छ। मन स्वयं विषययुक्त भएर जीवलाई सताउँछ।'

विषयहरूको चिन्तन प्रभुभक्तिमा बाधक छ। ईश्वर स्मरण हुन नपाए पनि सांसारिक विषयहरूको चिन्तन तर कहिल्यै नगर।

मनलाई विषयहरूतर्फ जान नदेऊ, त्यसलाई वशमा गरेर ममा एकाग्र गरिदेऊ।

ईश्वरमा मनलाई लय गर्नु महान् योग हो।

उद्धव, त्यसो तर कर्म, यश, सत्य, दम, शम, ऐश्चर्य, यज्ञ, तप, दान, व्रत, नियम, यम आदि कल्याणका कति साधन छन् तर सर्वश्रेष्ठ साधन मेरो भक्ति मात्र हो। भक्तिले सबै पापहरूलाई डढ़ाएर भस्म गरिदिन्छ।

**न साधयति मां योगो न सांख्यं धर्म उद्धव।**
**न स्वाध्याय स्तप स्त्यागौ यथा भक्तिर्ममोर्जिता॥**

( भा० ११-१४-२० )

मलाई प्राप्त गर्नका निमित्त अनन्य भक्तिमा जति सामर्थ्य छ त्यति सामर्थ्य योग, सांख्य, धर्म, वेदाध्ययन, तप, त्याग आदिमा छैन।

भक्तियोगको महत्तापछि प्रभुले ध्यानयोगको विधि बताउनुभयो।

ध्यान दुइ प्रकारका छन्—ध्यान र धारणा। एउटै अङ्गको चिन्तनलाई ध्यान भन्दछन्, सर्वाङ्गको चिन्तनलाई धारणा। ध्यान गर्दा-गर्दा त्यो ध्येयबाट एकरूप हुन्छ। जो प्रभुसङ्ग तन्मय भएको छ, त्यसलाई देहभान रहँदैन।

उद्धव, व्यर्थ भाषण पनि पाप हो, त्यसकारण सोची संझीकन बोल्नुपर्छ।

भक्तिबाट सिद्धि प्राप्त हुन्छ, तर ती मेरो प्राप्तिका निमित्त बाधक हुन्छन्, त्यसकारण तीबाट टाढ़ै बस। सिद्धिले प्रसिद्धि ल्याउँछ र प्रसिद्धिले प्रमाद। परिणामतः मेरो भजनमा विक्षेप हुन लाग्छ त्यसकारण सिद्धिहरूबाट टाढ़ै बस।

भगवान्‌ले आफ्ना विभूतिहरूको वर्णन गर्नुभो। ब्रह्मचर्याश्रम, गृहस्थाश्रम, वानप्रस्थाश्रम र संन्यासाश्रमको धर्म पनि बताउनुभयो।

भक्ति, ज्ञान, यम-नियमादि साधनहरूको पनि उहाँले वर्णन गर्नुभयो, जगत्‌मा कुनै पनि जीवलाई तुच्छ नसंझनू।

फेरि उद्धवजीले केही शब्दहरूको अर्थ र व्याख्या सोध्नुभयो। जवाफमा भगवान्‌ले यस्ता प्रकारबाट भन्नुभयो—

ममा बुद्धिको स्थापना गर्नु शम हो। इन्द्रियहरूलाई वशमा राख्नु दम हो। कुनै पनि प्राणीको द्रोह नगर्नु दान हो।

जगत्‌मा कुनै पनि जीवका प्रति कुभाव नराख्नु र सद्भाव राख्नु सबैभन्दा ठूलो दान हो। भूतद्रोहको त्याग दान हो। चेतन र जड़ कुनैसँग पनि द्रोह नगर। सबैलाई समान भावले हेर।

सबै कामनाहरूको त्याग तप हो। कामातुरको विचारसम्म नराख्ने मानिस ठूलो तपस्वी हो। वासना र स्वभावलाई जित्नु शौर्य हो।

ब्रह्मको मात्र विचार गर्नु श्रेष्ठ सत्य हो र धर्म मात्र सर्वोत्तम धन हो।

**धर्म इष्टं सर्वनृणाम्।**

मेरो भक्ति प्राप्त गर्नु पनि सर्वोत्तम लाभ हो।

बन्धन र मोक्षका तत्त्वको ज्ञाता पण्डित हो र ग्रन्थहरूमा लेखिएका सिद्धान्तलाई जीवनमा उतारेर भक्तिमय जीवन बिताउने मानिस उत्तम ज्ञानी हो।

देहलाई आत्मा मानेर देहमा अहम् बुद्धि राख्ने महामूर्ख हो।

सद्‌गुणहरूले सम्पन्न धनवान् हो र असन्तुष्ट व्यक्ति दरिद्र हो।

मायाको अधीन भएर सांसारिक विषयहरूमा फँसी इन्द्रियहरूको दास हुनेलाई जीव भन्दछन्। जसले इन्द्रियहरूलाई आफ्नो अधीन राखेर सांसारिक विषयहरूमा अनासक्त रहन्छ त्यो ईश्वर हो।

बाहिरका मात्र होइन भित्रका शत्रुहरूलाई पनि नाश गर्ने जितेन्द्रिय मात्र सच्चा वीर हो।

जो निन्दाबाट लेश मात्र पनि प्रभावित हुँदैन, त्यही सच्चा भक्त हो।

उद्धवजी, मनुष्यको कल्याणका निमित्त मैले तीन उपाय बताएको छु—( १ ) ज्ञानयोग, ( २ ) निष्काम कर्मयोग र ( ३ ) भक्तियोग।

मनुष्य-शरीर, ज्ञान र भक्ति प्राप्त गर्ने साधन हो, अतः श्रेष्ठ छ। यो मनुष्य-शरीर उत्तम डुङ्गाको समान छ, सबै फलहरूको मूल हो, करोड़ौं उपायहरूबाट पनि अलभ्य छ। फेरि पनि यो दैवसंयोगले पाइएको छ। गुरुरुपी माझीद्वारा मरूपी अनुकूल वायुमा अगाड़ि बढ्नलाई फेरि पनि यस अमूल्य देह-डुङ्गाको सदुपयोग नगरी भवसागर पार गर्नेका निमित्त प्रयत्न गर्दैन भने त्यो मनुष्य स्वयं आफ्नो नाश गर्छ र आत्मघाती हुन्छ।

**नृदेहमाद्यं सुलभं सुदुर्लभं प्लवं सुकल्पं गुरुकर्णधारम्।**
**मयानुकूलेन नभस्वतेरितं पुमान् भवाब्धिनतरेत्सआत्महा॥**

( भा० ११-२०-१७ )

उद्धव, सत्सङ्ग गर्न सकिएन भने केही कुरा छैन, तर कामी-विषयीहरूको सङ्गत कहिल्यै नगर।

सत्सङ्गको प्राप्ति ईश्वरको कृपामाथि आधारित छ, कामीको सङ्ग त्याग आफ्नो हातको कुरा हो।

मन केवल प्रभुलाई मात्र देऊ, कुनै स्त्री-पुरुष या नातागोतालाई होइन।

हे उद्धव ! तिमीले आफ्नो मन मलाई मात्र दिए। म तिम्रो धन माग्दिनँ, मन मात्र माग्छु।

हे उद्धव ! यस अखिल विश्वमा म मात्र व्याप्त छु, मेरो भावना गर।

भक्तिद्वारा सबैको आत्मारूप मेरो दर्शन गरेर मनुष्यको हृदयको अहङ्कारको गाँठो फुस्कन्छ, सबै संयम नष्ट हुन्छ र सबै कर्म पनि नष्ट हुन्छ।

**भिद्यते हृदयग्रन्थि श्छिद्यंते सर्वसंशयाः।**
**क्षीयन्ते चास्य कर्माणिमयि दृष्टेऽखिलात्मनि॥**

( भा० ११-२०-३० )

उद्धव कसैको प्रशंसाबाट प्रसन्न नहुनु, कसैको निन्दाबाट पनि अप्रसन्न नहुनु। स्तुति र निन्दालाई एक समान मान्नु।

उद्धवजी भन्न लागे—'निराधार निन्दालाई कसरी सहने ?'

भगवान्—'जसले निन्दा सहन सक्दैन, त्यो कच्चा हो। निन्दक तर मित्र हो, उसले हामीलाई दोष देखाइदिन्छ। यसैकारणले साधुजन सदा निन्दकलाई आफ्ना साथमा राख्छन्। निन्दाका शब्द आकाशमा विलीन भइहाल्छन्।'

निन्दक मित्र समान, साधो ! निन्दक मित्र समान।

फेरि भगवान्ले उद्धवजीलाई भिक्षुगीताको उपदेश दिनुभयो।

सुख-दुःख त मनको कल्पना हो। मनको निद्राको जस्तो स्थिति यदि जागृतिमा पनि भयो भने मुक्ति हुन्छ। मानिस भिक्षुको निन्दा गर्छन् तर त्यसले मनमा असर हुनै दिँदैन। भिक्षु भन्दछन्—

अर्थस्य साधने सिद्धे उत्कर्षे रक्षणे व्यये।
नाशोपभोग आयासस्त्रासश्चिंता भ्रमो नृणाम्॥

धनार्जनमा, धनको उपभोगमा, उसलाई बढ़ाउन र रक्षा गर्नमा, त्यसको नाश भएपछि परिश्रम, चिन्ता, त्रास हुन्छन् तापनि मनुष्य त्यसै धनका पछि दौड़िरहन्छ। धन हर प्रकारबाट, हर स्थितिमा मनुष्यलाई सताउँछ र पनि उसलाई विवेक भने आउँदैन।

पुरुरुवा-उर्वशीको दृष्टान्तद्वारा यो पनि भनिएको छ स्त्रीको सतत् सङ्गबाट पुरुषको दशा कस्तो हुन्छ।

दुष्टहरूको सङ्गति मनुष्यलाई अधोगतितर्फ लान्छ र सज्जनहरूको सङ्गतिले उर्ध्वगतितिर।

सत्सङ्ग ईश्वर कृपाबाट मात्र पाइन्छ। 'रामकृपा विनु सुलभ न सोइ'। तर कुसङ्ग त नगर्नु तिम्रो वशको कुरा हो।

ऐलगीतामा देहको चर्चा भएको छ जो माथि उल्लेख भइसकेको छ। यो शरीर मासु, हाड़, छाला सहित दुर्गन्धियुक्त छ। यसै देहमा लग्गु भएको व्यक्ति पशु र कीराको समान हीन छ।

अन्तमा उद्धवजी भगवानसङ्ग सोध्नुहुन्छ—'प्रभुजी, तपाईंले योग, ज्ञान र भक्ति मार्ग आदिको उपदेश दिनुभयो, तर जो व्यक्ति आफ्नो मनलाई वशमा गर्न सक्दछ, त्यसैको योगमार्ग सिद्ध हुन्छ। यस मनलाई वशमा गर्नभने कठिन छ वायोरिव सुदुष्करम्। त्यसकारण हे प्रभु ! जुन मानिसले मनलाई छिटै वशमा गर्न सक्दैन भने त्यसले सिद्धि कसरी प्राप्त गर्ने यो बताउनुस्।'

श्रीकृष्ण—उद्धवजी, अर्जुनले पनि मलाई यही सोधेका थिए। मनलाई अभ्यास र वैराग्यबाट वशमा गर्न सकिन्छ। तर सरल बाटो छ मेरो अव्यभिचारी भक्ति।

भक्तजन अनायासै ज्ञानी, बुद्धिमान, विवेकी र चतुरा हुन्छन र मलाई प्राप्त गर्छन्।

भक्तिके साधन कहौं बखानी।
सुगम पंथ मोहि पावहि प्रानी॥

यस सरलतम भक्तिमार्गको जति प्रशंसा गरेपनि कमै हुन्छ।

भक्ति स्वतंत्र छ। त्यसलाई कुनै क्रियाकाण्ड आदिको सहारा लिनुपर्दैन। उसले सबैलाई अधीन गर्छ। ज्ञानी र कर्मयोगीलाई पनि यस भक्ति उपासनाको आवश्यकता पर्छ। ती दुवैमा भक्तिको मिश्रण हुन पाएमा तब ती मुक्तिदायी बन्न सक्छन्।

सो स्वतन्त्र अवलम्ब न आना।
तेहि आधीन ज्ञान विज्ञाना॥

हे उद्धवजी,

भगतिहीन विरंचि किन होई। सब जीवहु सम प्रिय मोहि सोई।
भगतिवन्त अति नीचऊ प्रानी। मोर प्रान प्रिय असि मम बानी॥

मनुष्य जब सबै कर्महरूलाई त्यागेर आफ्नो आत्मा ममा समर्पित गरिदिन्छ तब त्यसलाई सर्वोत्कृष्ट बनाउने इच्छा मलाई हुन्छ। ती मबाट तद्रूप हुन योग्य बनी मोक्ष पाउँछन्।

अरूहरूको निन्दा नगर्नु। जगत्‌लाई सुधार्ने व्यर्थ प्रत्यन पनि नगर्नु। आफू स्वयंलाई मात्र सुधार्नु।

समाजलाई स्वयं प्रभुले पनि सुधार्न सक्नुभएन, तब साधारण मनुष्यले कसरी सक्ला? कृष्णाको समयमा पनि दुर्योधन, शिशुपाल आदि धेरै दुष्ट मानवहरूको अस्तित्व थियो।

जगत्‌लाई प्रसन्न गर्न पाउनु बड़ो कठिन छ, तर परमात्मालाई प्रसन्न गर्न पाउनु उति कठिन छैन।

हे उद्धव, म तिम्रो धर्म माग्दिनँ, मन म माग्दछु। मन दिने योग्य म ( परमात्मा ) हुँ। तिम्रो मनलाई बड़ो ध्यान दिएर रक्षा गर्ने छु। म सर्वव्यापी छु। तिमीले मेरै मात्र शरण लेऊ।

उद्धव, मैले तिमीलाई समग्र ब्रह्मज्ञानको दान दिएको छु। यस ब्रह्मज्ञानको दातालाई म आफ्नो सर्वस्व दिन्छु।

अब तिम्रो मोह, शोक आदि हटेनन् त? उद्धवले भगवान्‌लाई प्रणाम गरे र भने, 'अब म केही पनि सुन्न चाहन्नँ। जति सुनेको छु त्यसको मनन गर्न चाहन्छु।'

श्रीकृष्ण—'उद्धव, तिमी अब अलकनन्दा किनारा बदरिकाश्रममा बसेर इन्द्रियहरूलाई संयमित गरी ब्रह्मज्ञानको चिन्तन गर। आफ्नो मन ममा स्थिर गर्नू। त्यति गरेपछि तिमीले मलाई प्राप्त गर्न सक्नेछौ।'

बदरिकाश्रम योगभूमि हो, त्यहाँ प्रभुको प्राप्ति छिट्टै हुन्छ।

उद्धवजी—'प्रभु, तपाईं पनि मेरा साथ हिँड्नुहोस्।'

भगवान्—'उद्धव, म यस शरीरका साथ अब वहाँ जान सक्तिनँ। म चैतन्य स्वरूपबाट तिम्रो हृदयमै छु, तिम्रो साक्षी हुँ। त्यसकारण चिन्ता नगर। तिमीले जब आतुरता र एकाग्रताबाट मेरो स्मरण गरौला, म उपस्थित हुनेछु। अन्यथा एक्लै आउनु-जानु छ।'

जगत्‌मा सबैलाई थाहा छ एक्लै जानु छ भने स्त्री-पुरुष एक-अर्कामा आसक्त किन हुन्छन्। यस संसारका सबै सम्बन्ध मिथ्या छन्, असत्य छन्।

एक श्रीमान् नगर सेठको जवान छोरा रोज एक महात्माकहाँ कथा सुन्नलाई जाने गर्थ्यो, तर समयभन्दा पहिल्यै उठेर आउँथ्यो तब एक दिन महात्माले यसो गर्नुको कारण सोधे।

युवक—'महाराज, म आफ्नो माता-पिताको एकमात्र पुत्र हुँ। घर फर्कनलाई अलिकति पनि अबेर भयो भने उहाँहरू खोज्न निस्कनु हुन्छ र मेरी दुलही पनि मेरा निमित्त आफ्नो प्राण दिन्छिन्। तपाईं संसारीहरूको सम्बन्धलाई झूठो भन्नुहुन्छ तर तपाईंलाई कुनै अनुभव छैन।'

महात्मा—'यदि यस्तो हो भने हामी उनको प्रेमको परीक्षा किन गरेर नहेरौं ? यो जड़ी-बुटी तिमीले खाऊ, तिम्रो शरीर तात्ने छ। म उपाचर गर्न आउनेछु, फेरि वहाँ जो भइरहन्छ त्यो तिमीले हेरिरहनु।'

त्यस युवकले महात्माको आदेशको पालन गर्‍यो। त्यसको शरीर एकदम तातेर आयो। मातापिताले आत्तिएर कति डाक्टर र वैद्यलाई बोलाए तर उनीहरूको उपाय सफल भएन। युवककी दुलही पनि कल्पिरहेकी थिई।

यत्तिकैमा ती महात्मा आइपुगे। सबैले उनीसँग पुत्रको औषधि गर्न भनी प्रार्थना गरे। महात्माले चिकित्सा गर्दै भने—'कसैले जादु-टुना गरिदिएको रहेछ। म उपाय गर्न सक्छु।' उनले एउटा भाँड़ामा पानी झिकाए र त्यस पुत्रको शिरबाट पानी छुवाएर भने, 'मैले मन्त्रशक्तिबाट त्यस जादु-टुनालाई यस पानीमा उतारिलिएको छु। अब यदि यस युवकलाई बचाउनु छ भने यो पानी कसैले पिउनुपर्ने छ।'

सबैले एकैसाथ सोधे—महाराज ! तर, यो पानी पिउनेलाई कस्तो दशा हुने छ ?

महात्मा—'त्यो शायद मर्न पनि सक्ला तर यो युवक बाँच्नेछ। त्यसकारण तिमीहरूमध्ये कसैले यो पानी पिइहाल।'

युवककी आमाले भनिन्—'म आफ्नो प्यारो छोराको प्राण बचाउनलाई यो पानी पिउन तयार छु। तर मेरो मृत्युपछि मेरा वृद्ध पतिको सेवा कसले गर्ला ?'

युवकको पिताले भने—'म यो पानी पिइदिउँला तर मेरो मृत्युपछि विचरी मेरी पत्नीको के दशा होला ? ऊ मविना बाँच्ली पो कसरी ?'

महात्माले ठट्टा गरे—'तिमी दुवैले आधा-आधा पानी पिओ, दुवैको सबै क्रियाकर्म एकसाथ हुनेछ।'

युवककी पत्नीलाई अनुरोध गर्दा उसले भनी—'मेरी वृद्धा सासुले संसारको सबै सुख भोगिलिनुभएको छ। म अहिले तरुणी छु। मैले अहिले संसारको सुख देखेकी सम्म छैन। म किन मरूँ।'

यसप्रकार युवकका सबै सम्बन्धीहरूले पानी पिउन नामंजूर गरे। उल्टै उनीहरूले महात्मासँग भन्नथाले—'महाराज, तपाईं स्वयंले पिइदिनुपर्‍यो। तपाईंका शेषपछि रुनेवाला कोही छैनन्। तपाईं सँधै भन्नुहुन्थ्यो परोपकार सबैभन्दा ठूलो धर्म हो। त्यसकारण तपाईंले स्वयं परोपकार गरिदिनुहोस्। हामी तपाईंका पछि हरसाल श्राद्ध र ब्राह्मणभोज गरिदिउँला।'

महात्माले पानी पिइदिए। पुत्रलाई आफ्ना नातेदारहरूको व्यवहार र प्रेमको अनुभव ठीकसँग भयो। उसले उठेर महात्माका साथै घर छोड़िदियो। महाराज, मैले संसारको असारता देखें। कोही कसैको छैन। सबै सम्बन्ध स्वार्थपरक छ।

वास्तविक सम्बन्ध एक ईश्वरको मात्र हो। महात्मा कबीर पनि भन्नुहुन्छ—

मन फूला फूला फिरे जगतमें कैसा नाता रे॥
पेट पकड़ कर माता रोए, बाँह पकड़ कर भाई।
लपट लपट कर तिरिया रोवे, हंस अकेला जाई ......मन.....
जबतक जीवे माता रोवे, बहन रोवे दस मासा,
तेरह दिन तक तिरिया रोवे फेर करे घर वासा ......मन.....

हे उद्धव, म सदा तिम्रा साथमै छु। सदा मेरो स्मरण गर्दै रहनु पनि सिद्धि हो। सिद्धि स्मरण संसिद्धि।

तर उद्धवको उद्वेग मेटिँदैन। त्यसकारण भगवान्ले उनलाई आफ्ना चरणपादुका दिनुभयो। अब उद्धवलाई लाग्यो भगवान् उनैका साथ छन्।

श्रीकृष्णलाई सदा आफ्ना साथमा राख। परमात्माको सामीप्यको सदा अनुभव गर।

तुकारामले भनेका थिए—चाहे मेरो वंश नहोस्, चाहे मलाई भोकै मर्नु परोस् तर मेरा प्रभु साथ रहून्।

उद्धव बदरिकाश्रम गए। उनले सद्गति पाए र उनी कृतार्थ भए।

फेरि यादवहरूको विनाशको कथा सुनाए।

द्वारिका लीलाको समाप्तिका समय पंढरपुरमा पुण्डरिक भक्त भए, जसलाई कृतार्थ गर्नका निमित्त द्वारिकानाथ विट्ठलनाथ बने। पुण्डरिक घरबाट छिट्टै बाहिर आएनन्, भगवान्को कम्मरमा वेदना हुन थाल्यो र उनी कम्मरमा हात राखेर खड़ा छन्।

भगवान् भन्नुहुन्छ—'कहिल्यै निराश नहुनु। मेरा शरणमा आऊ। म तिम्रा निमित्त सदा खड़ा छु।' उनले कम्मरमा हात राखेर यो सूचित गर्दछन् उनको शरणमा जानेवालाका निमित्त संसार केवल कम्मरसम्मको गहिराइमा छ। त्यति जलमा कोही डुब्न सक्दैन।

आफ्ना पापहरूको प्रायश्चित्त गरेर मेरो शरणमा आयो भने संसारसागरबाट तरिहाल्ने छौ।

श्रीकृष्ण साक्षात् परमात्मा हुनुहुन्छ। उहाँ पुण्डरिकका निमित्त द्वारिकाबाट पंढरपुरसम्म जानुभएको थियो। उहाँ अहिलेसम्म पंढरपुरमा विद्यमान हुनुहुन्छ। विट्ठलनाथका गुणहरूको वर्णन कसले गर्न सक्छ ?

नेति नेति कह वेद पुकारे।
सो अधरन पर मुरली धारे॥

शिव सनकादिक अन्त न पावै, सो सखियन संग रास रचावै।
सकल लोकमा आप पुजावै, सो मोहन व्रजराज कहावै॥
महिमा अगम-निगम जिहि गावै, सो यशोदा लिए गोद खिलावै।
जप तप संयम-ध्यान न आवै, सोइ नन्दके आँगन धावै॥
शिव सनकादिक अन्त न पावै, सो गोपन की गाय चरावै।
अगम अगोचर लीला धारी, सो राधावश कुञ्ज विहारी॥
जो रस ब्रह्मादिक नहिं पायौ, सो रस गोकुल गलिन बहायौ।
सूर सुयश कहि कहाँ बखानै, गोविन्द की गति गोविन्द जाने॥

## श्रीकृष्णाय नमः।

बाह्रौं स्कन्धमा आश्रय लीला छ। भागवतको प्रतिपाद्य तत्त्व आश्रय हो।

राजा परीक्षित्‌ले सोधे—'अब यस पृथ्वीमा कसको राज्य होला?'

शुकदेवजी—'जरासन्धका पिता वृहद्रथका वंशको अन्तिम राजा हुनेछ पुरञ्जय र उसको मन्त्रीको नाउँ हुनेछ शुनक। उसले आफ्ना स्वामीलाई मारेर आफ्नो छोरा प्रद्योतलाई राजसिंहासनमा बसाल्ने छ। त्यसपछि यस भरतखण्डमा नन्द, चन्द्रगुप्त, अशोक आदि राजा हुने छन्, त्यसका पछि आठ यवन तथा दश गोरा राजाले राज्य गर्नेछन्।'

कलियुगका छली राजनीतिज्ञले भारतको टुक्रा-टुक्रा पारेर देशलाई छिन्नभिन्न पारिदिनेछन्। कलियुगका दुष्ट शासकले गाईहरूको हत्या गर्ने छन्, प्रजाको धन खोसेर स्वयं विलास-वैभवमा लीन हुनेछन्।

कलियुगका ब्राह्मण वेद तथा सन्ध्याबाट विहीन हुनेछन्।

आफ्नो कुटुम्बमात्रको पालन-पोषण गर्नु बाठो मानिने र धर्मको सेवन कीर्ति मात्रका निमित्त गरिने हुन्छ। दाक्ष्यं कुटुम्बभरणं यशोऽर्थे धर्मसेवनम्।

भागवतमा बताइएको कलियुगको लक्षण आज प्रत्यक्ष देखिइरहेछ।

हे राजन्! कलियुगको अन्तमा धर्मको रक्षाका निमित्त भगवान् कल्किले अवतार धारण गर्नु हुनेछ। थाहा छैन आजसम्म पृथ्वीमा कति सम्राट आए र कति गई पनि हाले।

कलियुगका पुरुष नारीको अधीन बस्नेछन्—'स्त्रैणाः कलौ नराः।'

मनुष्यले आफ्नो स्वार्थसिद्धिका निमित्त कसैको द्रोह नगरोस्।

यस स्कन्धमा कलियुगको लक्षण, दोष तथा त्यसबाट बाँच्ने उपाय बताइएको छ। सबैभन्दा श्रेष्ठ उपाय हो भगवान्‌को नामको सङ्कीर्तन।

कलियुगका कति दोष भएर पनि एकमात्र लाभ छ। कलियुगमा जसले पनि कृष्ण कीर्तन गर्छ भने त्यसको घरमा कलि कहिल्यै आउँदैन। कलिबाट बाँच्नमा एकमात्र उपाय हो कृष्णकीर्तन।

शुकदेवजी भन्नुहुन्छ—

हे राजन् कलियुगका अपराधहरू अनेक छन् तापनि श्रीकृष्णको कीर्तन गर्नाले सबै दोषहरूबाट, पापहरूबाट छुटेर मुक्तिलाई पाउन सकिन्छ।

कलेर्दोष निधेः राजन् अस्ति ह्येको महान् गुणः।
कीर्तना देव कृष्णास्य मुक्तसंग परं व्रजेत्॥
कृते यद्ध्यायतो विष्णुं त्रेतायां यजतो मखैः।
द्वापरे परिचर्यायां कलौ तद् हरिकीर्तनम्॥

सत्ययुगमा विष्णुको ध्यानले, त्रेतायुगमा यज्ञहरूले, द्वापरमा विधिपूर्वक विष्णुपूजाले जो फल पाइन्थ्यो त्यही फल कलियुगमा भगवान्को नामकीर्तनले पाइन्छ।

मृत्युका समयमा परमेश्वरको ध्यान गर्नाले उहाँले जीवलाई आफ्नो स्वरूपमा समाहित गरिदिनु हुन्छ।

हे राजन्! तिमी आसन्न मृत्यु छौ, त्यसकारण आफ्नो हृदयमा भगवान् केशवलाई स्थापना गर। उहाँले तिमीलाई परम गति दिनुहुनेछ।

हे राजन्! जन्म जरा र मृत्यु शरीरको धर्म हो, आत्माको होइन। आत्मा अजर, अमर छ। त्यसकारण म मरिजाउँला यस्तो पशुबुद्धिको त्याग गर।

घैंटो फुटेपछि त्यसभित्र रहेको आकाश जसरी महाकाशमा गएर मिसिन्छ यसै प्रकार देहोत्सर्ग भएपछि जीव ब्रह्ममय हुन्छ।

राजन् आज तक्षकले तिमीलाई डस्ने छ। उसले तिम्रो शरीरलाई मार्नसक्ला, आत्मालाई होइन। तिम्रो आत्मा तर परमात्मासँग गएर मिल्नेछ तिमी शरीरबाट भिन्न छौ। आत्मा परमात्माको अंश हो।

'अहं ब्रह्म परं धाम ब्रह्माऽहं परमं पदम्'

राजन्! म परमात्मा रूप ब्रह्म हुँ र परम पद रूप ब्रह्म पनि मै हुँ। यस्तो सोचेर आफ्नो आत्मालाई ब्रह्मसँग जोरिलेऊ।

तक्षक काल पनि श्रीकृष्णकै अंश हो। शरीर नाशवान् छ, आत्मा तर अमर छ।

जबसम्म म यहाँ छु, तक्षक आउन पाउँदैन। अरू केही सुन्नको इच्छा छ भने भन।

परीक्षित्—'महाराज, तपाईंले मलाई व्यापक ब्रह्मको दर्शन गराइदिनुभयो, त्यसकारण म निर्भय भएको छु।'

श्रीमद्भागवतश्रवणका पाँच फल छन्—(१) निर्भयता, (२) हृदयमा प्रभुको साक्षात् प्रवेश, (३) निःसन्देहता, (४) सबैमा भगवद् दर्शन र (५) परम-प्रेम।

गुरुजी मैले पाँच फल प्राप्त गरिसकेको छु। प्रभु ! भागवत्को प्रथम स्कन्ध सुनेर परमात्माको दक्षिण चरणको, द्वितीय स्कन्ध सुन्नाले बायाँ चरणको, तेस्रो र चौथो स्कन्धहरूलाई सुनेर दुवै हातको, पाँचौं र छैटौं स्कन्ध सुनेर दुवै जाँघको, सातौं स्कन्ध सुन्नाले कटिभागको, आठौं र नवौं भाग सुन्नाले प्रभुको विशाल वक्षःस्थलको दर्शन र दशम स्कन्धको श्रवणले प्रभुको मुखारविन्द र नयनहरूको दर्शन भयो। एकादश स्कन्धलाई सुनेर श्रीनाथजीको माथि उठेको हस्त देखियो। बाह्रौं स्कन्धको श्रवणले मलाई लागिरहेछ श्रीकृष्ण दुवै हातले मलाई बोलाइरहनुभएको छ।

अब म प्रभुकै ध्यान गरिरहेको छु। म उहाँकै शरणमा छु। मलाई सर्वत्र उहाँ मात्रै देखिनुहुन्छ। म उहाँछेऊ गइरहेछु। उहाँले मलाई बोलाइरहनु भएको छ। म कृतार्थ भएँ।

महाराज, तपाईंले केवल कथा श्रवणमात्र गराउनु भएन, प्रभुको दर्शन पनि मलाई गराइदिनु भयो, तपाईंले भन्नुभयो सारा जगत् ब्रह्मरूप छ। तक्षक जगत्बाट पृथक् छैन, त्यो पनि ब्रह्मरूपै हो। म तपाईंलाई बारम्बार प्रणाम गर्छु। तपाईंले ममाथि ठूलो उपकार गर्नुभएको छ।

शुकदेवजी—'राजन्, तिम्रा साथ-साथै म पनि कृतार्थ भएँ किनभने मलाई पनि कथा श्रवणको लाभ भइरहेछ। तिम्रा कारणले म पनि प्रभुमा लीन हुन सकें। उहाँ मेरा हृदयमा विराजमान हुनुभयो। राजन्, म अब अगाड़िको कुनै प्रसङ्ग पनि हेर्न चाहन्नँ। यदि कुनै शंका छ भने सोध्न सक्छौ। ब्रह्मनिष्ठ हुनाको कारण मेरो दृष्टिले तक्षकको विषलाई अमृत बनाइदिनेछ।'

परीक्षित्ले गुरुदेवलाई वन्दना गरेर भने—'अब मेरो मनमा कुनै शङ्का शेष छैन। तपाईंको कृपाले म निर्लेप र निर्भय भइसकेको छु।'

शुकदेवजीले जाने इच्छा गर्नुभयो। राजाले उनको पूजा गर्ने इच्छा व्यक्त गरे।

राजाले शुकदेवजीको पूजा गरे। उनले राजाको शिरमा आफ्नो बरदहस्त राखिदिए। त्यसै क्षण राजालाई परमात्माको दर्शन भयो। जीव र ब्रह्म एक भए।

सत्रमा भाग लिइरहेका सबै महर्षिहरूलाई परम आश्चर्य भयो।

व्यासजी सोच्नुहुन्छ, मैले आफ्नो छोरालाई भागवतको अध्ययन गराएँ, तर जो तत्त्व शुकदेवजीले जान्न सके, त्यो मैले पनि जान्न पाएको छैन। व्यासजीले शुकदेवजीलाई प्रणाम गरे।

गुरुदेव र शुकदेवजी अन्तर्ध्यान हुनुभयो।

राजा परीक्षित्को शरीरमध्येबाट एउटा ज्योति प्रकट भयो र महाज्योतिसाथ विलीन भयो।

तक्षक आएर राजालाई डस्यो, तर उहाँ पहिल्यै भगवान्का धाममा गइसक्नुभएको थियो।

परीक्षित्को जस्तै तक्षकको आगमनको अगावै परमधाममा जाने धन्य हुन्।

सूतजी भन्नुहुन्छ—'परीक्षित्को मोक्ष मैले स्वयं देखेको थिएँ।'

यसप्रकार, सबै पापहरूका नाश कर्ता इन्द्रियहरूका नियन्ता भगवान् श्रीहरिको भागवतमा वर्णन छ।

कथा सुनेर जीवनमा लागू गर्न सक्यौं भने कथा सुनेको सार्थक हुनेछ।

सत्कर्मको कुनै अन्त छैन। जीवनको अन्तसम्म सत्कर्म गर्दै रहू !

कथा श्रवणको समय वक्ता र श्रोताबाट जानी-नजानी केही दोष हुन जाने संभावना हुन्छ। त्यसकारण तीनपटक 'श्री हरये नमः' यसप्रकार बोल। यसप्रकार जप गर्नाले सबै दोष डढ्ने छन्।

मनुष्यलाई ठेस लाग्दा, छिउँ आउँदा, दुःखी अवस्थामा, विपदमा यदि 'श्री हरये नमः', को सस्वर पाठ गर्‍यो भने तब उसका दुःख र दोष दूर हुन्छन् र उसका पाप नष्ट हुन्छन्।

पतितः स्खलितश्चार्त क्षुत्वा वा विवशो व्रुवन्।
हरये नमः इत्युच्चैर्मुच्यते सर्वपातकात्॥

(भा० १२-१२-४६)

अन्तमा जसको नाम संकीर्तनले सबै पापहरू नाश गर्दछ र जसलाई गरेको प्रणामले सबै दुःखहरू शान्त हुन्छन् ती परमात्मालाई, श्रीहरिलाई हामी प्रणाम गरौं।

नाम संकीर्तनं यस्य सर्वपाप प्रणाशनम्।
प्रणामो दुःख शमनस्तं नमामि हरिं परम्॥

(भा० १२-१३-२३)

सशङ्खचक्रं सकिरीट कुण्डलं।
सपीतवस्त्रं सरसी रूहेक्षणम्॥
सहारवक्षः स्थल कौस्तुभश्रियं।
नमामि विष्णुं शिरसा चतुर्भुजम्॥